# अर्थबोध

वार्षिक पत्रिका

वर्ष : १ अंक : १    बि.सं. २०६९




नेपाल राष्ट्र बैंक, वीरगञ्ज कार्यालय

# अर्थबोध

## वार्षिक पत्रिका

वर्ष: १ अंक : १ वि.सं. २०६९ (असार)

**प्रधान सम्पादक**
उपेन्द्रकुमार पौडेल

**सम्पादक**
किरण पण्डित

**सहायक सम्पादक**
सुरेश शिवाकोटी
खगेश्वर भण्डारी
मनोज पोखरेल



**नेपाल राष्ट्र बैंक, वीरगञ्ज कार्यालय**
आदर्शनगर, वीरगञ्ज
फोन: (०५१)५२२५९८, (०५१)५२५२७२
फ्याक्स: (०५१)५२१९०२

# यस अंकमा ...

# १. नेपाल राष्ट्र बैंक वीरगञ्ज कार्यालय

## १.१ परिचय

नेपाल राष्ट्र बैंकको स्थापना वि.सं.२०१३ साल वैशाख १४ गते भएको हो । बैंकको केन्द्रीय कार्यालय बालुवाटार काठमाडौंमा रहेको छ । जहाँ विभिन्न पन्ध्रवटा विभाग/कार्यालयहरू रहेका छन् भने बैंकको थापाथली, काठमाडौं स्थित कार्यालयमा विभिन्न चारवटा विभाग/कार्यालयहरू रहेका छन् । त्यस्तै उपत्यका बाहिर विराटनगर, जनकपुर, वीरगञ्ज, पोखरा, सिद्धार्थनगर, नेपालगञ्ज र धनगढीमा गरी जम्मा सातवटा कार्यालयहरू छन् ।

बैंक स्थापनाको सुरुआती वर्षहरूमा मूल उद्देश्य "नेपाली मुद्राको प्रचलन"को प्राप्तिको लागि बैंकले उपत्यका बाहिर विभिन्न शाखा, उपशाखा, तथा धेरै संख्यामा डिपोहरू स्थापना गर्दै आएको थियो । सो क्रममा पहिलो शाखाको रूपमा विराटनगरमा वि.सं.२०१३ सालमा शाखा खोलिएको थियो♣ भने वि.सं.२०१४ असार मसान्त सम्ममा वीरगञ्जमा समेत गरी बैंकले १३ वटा डिपो कार्यालय स्थापना गरिसकेको थियो♦। पहिले डिपोको रूपमा स्थापना भएको वीरगञ्ज कार्यालयलाई आर्थिक कारोबारको विकाससँगै शाखाको रूपमा स्तरोन्नती गरिएको हो । वि.सं २०१८ असारसम्म आइपुग्दा वीरगञ्ज समेत गरी बैंकका ४ वटा शाखाहरू स्थापना भइसकेका थिए● ।

वीरगञ्जमा रहेको गहवामाई (माईस्थान) मन्दिरको पूर्वतर्फ रहेको व्यक्तिगत घरमा भाडामा सञ्चालन भएको यो कार्यालय वि.सं.२०२९ साल पछि भने वीरगञ्ज उप-महानगरपालिकाको वडा नं. १३ आदर्शनगरमा रहेको आफ्नै भवनमा सञ्चालन हुँदैआएको छ । कार्यालय रहेको परिसरमा कार्यालय तथा व्यवस्थापकको निवास, सुरक्षा-पोष्टपतिको कार्यालय तथा आवास गृह, गार्ड-रुम तथा पुरानो अतिथि गृह रहेको छ भने कार्यालय परिसर नजिकै अधिकृत आवास गृह तथा सुविधा सम्पन्न नयाँ अतिथि गृह रहेको छ ।

## १.२ संगठनात्मक संरचना

यस कार्यालयका कार्यहरूलाई व्यवस्थित गर्न बैंकिङ, आन्तरिक प्रशासन, मुद्रा व्यवस्थापन र अनुसन्धान गरी चार एकाइमा विभाजन गरिएको छ । प्रत्येक एकाइमा नायव व्यवस्थापकको नेतृत्वमा आवश्यकता अनुसार कर्मचारीहरू कार्यरत रहेका छन् (आन्तरिक प्रशासन तथा मुद्रा व्यवस्थापन एकाइको जिम्मेवारी एक जना नायव व्यवस्थापकमा रहने गरेको) । यस कार्यालयमा हाल विभिन्न एकाइमा कार्यरत स्थायी कर्मचारीहरूको संख्या ५७ जना रहेको छ । नेपाल राष्ट्र बैंकका प्रथम श्रेणीका अधिकृत यस कार्यालयको व्यवस्थापकको रूपमा कार्यालय प्रमुख रहने व्यवस्था रहेको छ । यस कार्यालयको संगठनात्मक संरचनालाई अनुसूची-१ मा प्रस्तुत गरिएको छ ।

---

♣ Bhusal, LN (2005). Human Resource Management. ***Nepal Rastra Bank in 50 Years,*** Nepal Rastra Bank, 1-8.

♦ Shrestha, BR (2005). Corportate Leadership. ***Nepal Rastra Bank in 50 Years,*** Nepal Rastra Bank, 9-33.

● Sitaula, LP (2005). Organisational Development and Corporate Planning. ***Nepal Rastra Bank in 50 Years***, Nepal Rastra Bank. 34-52.

### १.३ मुख्य कार्यहरू

नेपाल राष्ट्र बैंकले लिएका उद्देश्य हासिल गर्नको निमित्त आवश्यकता अनुसार जिल्ला स्थित कार्यालयहरू स्थापना गरिए बमोजिम नै वीरगञ्ज कार्यालयलको पनि स्थापना भएको हो । यस कार्यालयको कार्यक्षेत्र अन्तर्गत नारायणी अञ्चलका बारा, पर्सा, रौतहट, मकवानपुर र चितवन गरी पाँचवटा जिल्लाहरू पर्दछन् । बैंकले लिएका उद्देश्य प्राप्तिका लागि यस कार्यालयका चार एकाइबाट प्रभावकारी रूपमा कार्य सम्पादन हुँदै आएको छ ।

यस कार्यालयको ***बैंकिङ एकाइ***बाट टि.टि.(टेलिग्राफिक ट्रान्सफर), ड्राफ्ट, राष्ट्र ऋणको सावाँ तथा ब्याज भुक्तानी आदिको कारोबार गर्ने, मनीचेञ्जरहरूको आकस्मिक तथा नियमित निरीक्षण गर्ने, विदेशी मुद्रा खरिद गर्ने, बैंक तथा वित्तीय संस्थाको खाता सञ्चालन, अन्तरबैंक हिसाव मिलान कार्य (Clearing), बैंक तथा वित्तीय संस्था एवम् सरकारी निकायले माग गरे बमोजिमको खाता सञ्चालन गर्ने, खातामा रहेको रकम माग बमोजिम नगद भुक्तानी दिने वा अन्य बैंक तथा वित्तीय संस्था वा निकायको खातामा ट्रान्सफर गर्ने, नगद जम्मा गर्ने, सरकारी खातामा जम्मा हुन आएको रकम सम्बन्धित खातामा जम्मा गर्ने, उक्त खाताको रकम चेक मार्फत् सम्बन्धित व्यक्ति तथा संस्थालाई भुक्तानी दिने लगायतका कार्य गर्ने गरिन्छ ।

***आन्तरिक प्रशासन एकाइ***मा कर्मचारीको हाजिरी, बिदा आदिको अभिलेख राख्ने, भ्रमण आदेश जारी गर्ने, कर्जा सापटीका भौचर पास गर्ने जस्ता सम्पूर्ण दैनिक प्रशासनिक कार्य, लेखा सम्बन्धी कार्य लगायत वार्षिक कार्ययोजना तर्जुमा तथा कार्यान्वयन र कार्यालयको बजेट तयार गर्ने कार्यहरू पर्दछन् ।

***मुद्रा व्यवस्थापन एकाइ***बाट यस क्षेत्रका नोट कोषहरूमा आवश्यकता बमोजिम नोटको मौज्दात कायम राख्ने, ती कोषहरूको नियमित अनुगमन तथा निरीक्षण गर्ने, झुत्रा तथा पुनः प्रयोगमा ल्याउन नसकिने नोट धुल्याउने लगायतका कार्यहरू हुने गर्दछन् ।

***अनुसन्धान एकाइ***बाट यस क्षेत्रको वार्षिक तथा अर्धवार्षिक आर्थिक गतिविधिहरूको र सम-सामयिक विषयको विशेष अध्ययन प्रतिवेदन तथा अन्य तोकिएको संक्षिप्त अध्ययन प्रतिवेदन तयार गरी अनुसन्धान विभागमा पठाउने, सहकारी संस्थामा ऋण लगानी पूर्व सम्भाव्यता अध्ययन तथा कर्जा सदुपयोगिताको निरीक्षण प्रतिवेदन तयार गरी लघुवित्त प्रवर्द्धन तथा सुपरिवेक्षण विभागमा पठाउने, सरकारी राजस्व तथा खर्चको तथ्याङ्क बैंकिङ कार्यालयको केन्द्रीय लेखा फाँटमा पठाउने, तोकिएका ढाँचामा संयोजन तथा तालिकीकरण गरी आयात तथा निर्यातको तथ्याङ्क, बैक तथा मनीचेञ्जर मार्फत् भएका भारतीय रुपैयाँको खरिद बिक्रीको तथ्याङ्क र सीमावर्ती क्षेत्रको मूल्य सम्बन्धी तथ्याङ्क अनुसन्धान विभागमा पठाउने कार्य हुने गर्दछ ।

## २. कार्यालयको वार्षिक कार्यसम्पादन

यस अंशमा यस कार्यालयका एकाइहरूको वार्षिक (मुख्यतः वि.सं.२०६८ वैशाख-चैतको अवधि) कार्यसम्पादनलाई देहाय बमोजिम प्रस्तुत गरिएको छ ।

### २.१ बैंकिङ एकाइ

यस एकाइ अन्तर्गत बिल्स, निक्षेप, नगद तथा क्लियरिङ्ग गरी चारवटा फाँटहरू रहेका छन् । ती फाँटको यस वर्षको कार्यसम्पादन देहाय बमोजिम रहेको छ ।

### २.१.१ बिल्स फाँट

यस फाँटबाट ड्राफ्ट तथा टि.टि.को कारोबार, विदेशी मुद्रा खरिद, मनीचेञ्जर अनुमतिको सिफारिस, मनीचेञ्जरको निरीक्षण तथा खारेजीको सिफारिस, बिल्स खरिद, बिल्स कलेक्सन, लगायत सरकारी कर्मचारीहरूको निवृत्तिभरण भुक्तानी आदि कार्य हुँदै आएको छ । कार्यालयको कार्यक्षेत्र भित्र भारतीय मुद्रा सटही र विदेशी मुद्रा खरिदको लागि २०६८ चैत मसान्तसम्ममा ३१ वटा (२३ वटा भा.रु. मात्र, ८ वटा परिवर्त्य विदेशी मुद्रा समेत) मनीचेञ्जर संस्थाहरू सञ्चालनमा रहेका छन् । गत वर्ष ३२ वटा मनीचेञ्जर सञ्चालनमा रहेकोमा एउटा मनीचेञ्जरले खारेजीको लागि निवेदन पेश गरेको र अर्को एउटा मनीचेञ्जरले तोकिएको समयमा नवीकरण नगरेकाले दर्ता खारेजी भएको छ भने यस वर्ष एउटा थप मनीचेञ्जरलाई कारोबारको अनुमती दिइएको छ ।

विदेशी मुद्रा खरिद गर्ने कार्य यो फाँटको अर्को महत्वपूर्ण कार्य हो । गत वर्ष (२०६७ वैशाख–चैत) रु. २९ करोड ७० लाख ७८ हजार बराबरको विभिन्न (१८ प्रकारका) परिवर्त्य विदेशी मुद्रा खरिद गरिएको थियो । यस वर्षको चैत मसान्तसम्ममा उक्त रकम उल्लेख्य रूपमा वृद्धि भई रु. ३५ करोड ६२ लाख ६२ हजार पुगेको छ ।

### २.१.२ निक्षेप फाँट

बैंक तथा वित्तीय संस्था एवम् सरकारी निकायले माग गरे बमोजिमको खाता सञ्चालन गर्ने, उक्त खातामा रहेको रकम चेक मार्फत् नगद भुक्तानी दिने वा अन्य बैंक तथा वित्तीय संस्था वा निकायको खातामा रकम ट्रान्सफर गर्ने, नगद जम्मा गर्ने, कोष तथा लेखा नियन्त्रकको कार्यालयबाट आएका निकासाहरू सम्बन्धित खातामा जम्मा गरिदिने जस्ता कार्यहरू यस फाँटबाट हुने गर्दछन् ।

यस कार्यालयमा केन्द्रीय सरकार, स्थानीय निकाय, बैंक तथा वित्तीय संस्थाहरू र सरकारी संस्थान गरी मुख्य ४ प्रकारका खाताहरू सञ्चालनमा रहेका छन् । जस अनुसार केन्द्रीय सरकार अन्तर्गत क.४.१. देखि क.४.५. सम्म साधारण निकासा दिने खाताहरू, क.५.१. देखि क.५.५. सम्म पुँजीगत निकासा दिने खाताहरू रहेका छन् भने ख.१ देखि ख.३. सम्म क्रमशः चालू, पुँजीगत र धरौटी खाताहरू सञ्चालनमा रहेका छन् । सरकारी निकायका खाता मध्ये हाल ९२ वटा चालू, ८९ वटा पुँजीगत र ७५ वटा धरौटी खाता र २६ वटा फ्रिज नहुने खाताहरू सञ्चालनमा रहेका छन् । स्थानीय निकाय अन्तर्गत जिल्ला विकास समिति र नगरपालिकाको गरी ९ वटा खाता सञ्चालनमा रहेका छन् । पर्सा जिल्लामा रहेका गाउँ विकास समितिका खाता समेत यस कार्यालयमा रहेको छ ; जसमा चालू, पुँजी र धरौटी गरी क्रमशः ८२, ८२ र ८३ वटा खाता सञ्चालनमा रहेका छन् । त्यसैगरी बैंक तथा वित्तीय संस्था र सरकारी संस्थानहरूको खाता समेत यस कार्यालयमा रहेको छ । बैंक तथा वित्तीय संस्थाको ७४ वटा र सरकारी संस्थानहरूको १३ वटा खाता सञ्चालनमा रहेका छन् ।

आ.व. २०६८/६९ को चैत मसान्त सम्ममा यस कार्यालयमा कर राजस्व तर्फ रु. २ अर्ब ४८ करोड ६३ लाख र गैर कर राजस्व तर्फ रु. ४ करोड ५९ लाख गरी कुल राजस्व रु.२ अर्ब ५३ करोड २२ लाख संकलन भएको छ । गत वर्षको सोही अवधिमा कर राजस्वतर्फ रु. १ अर्ब ७५ करोड ६३ लाख र गैरकर राजस्वतर्फ रु. ३१ करोड ५५ लाख गरी कुल राजस्व रु.२ अर्ब ७ करोड १८ लाख संकलन भएको थियो ।

यस फाँटबाट नयाँ चेक जारी, आथिक वर्ष समाप्त भैसकेपछि चेकको नवीकरण, तथा खाता सञ्चालन सम्बन्धी सम्पूर्ण कार्य समेत गर्ने गरिन्छ ।

### २.१.३ नगद फाँट

बैंकिङ एकाइ अन्तर्गत रहेको यस फाँटले चेकको भुक्तानी, खातामा जम्मा हुन आएको नगद, जम्मा हुन आएको विदेशी विनिमय संकलन गरी ढुकुटी दाखिला तथा भारतीय मुद्रा सटही गर्ने कार्य गर्दछ । भारतीय मुद्राको

सटहीको लागि हप्तामा पाँच दिन (आइतबार–बिहीबार) भारतीय मुद्रा सटही काउन्टर सञ्चालनमा रहने गरको छ । यस फाँटमा रहेको ढुकुटीमा भारतीय मुद्रा, विदेशी मुद्रा, नेपाली नोट तथा सिक्का र जारी नभएका चेक बुक भण्डारण गर्ने गरिन्छ । यस फाँटले दैनिक कारोबारको लागि आवश्यक भन्दा बढी (समान्यतया रु.५० करोड भन्दा बढी) नगद जम्मा भएमा मुद्रा व्यवस्थापन एकाइमा रहेको नोट कोषमा दाखिला गर्दछ ।

यस वर्ष रु. १२ अर्ब ६५ करोड ४६ लाख नगद भुक्तानी र रु. १२ अर्ब ६८ करोड ७० लाख नगद जम्मा गरी खुद रु. ३ करोड २४ लाख नगद जम्मा भएको छ । अघिल्लो वर्षको सोही अवधिमा नगद भुक्तानी रु. २६ अर्ब ७८ करोड ४ लाख र नगद जम्मा रु. २६ अर्ब ९१ करोड ६ लाख भएको थियो । यस वर्ष विभिन्न मितिमा ४३ पटक चलन चल्तीबाट नोटलाई खिचिएको (Contraction) र १ पटक मात्र चलन चल्तीमा नोट प्रवाह (Expansion) गरी खुद रु. १७ अर्ब १० करोड ८० लाख नोट चलन चल्तीबाट खिचिएको छ । गत वर्ष २९ पटक नोट खिची (Contraction) कुल रु. ४४ अर्ब ५५ करोड ९ लाख बराबरको नोट चलन चल्तीबाट खिचिएको थियो ।

यस कार्यालयबाट यस वर्ष रु. ४८ लाख ९० हजार रुपैयाँ बराबरको सिक्का बिक्री गरिएको छ भने गत वर्षको सोही अवधिमा रु.४६ लाख ८१ हजार रुपैयाँ बराबरको सिक्का बिक्री भएको थियो । यसवर्ष यस कार्यालयबाट रु. ३५ करोड ९३ लाख ४८ हजार बराबरको भारतीय मुद्राको बिक्री भएको छ भने गत वर्ष रु.४९ करोड ९३ लाख ३९ हजार बिक्री भएको थियो ।

## २.१.४ क्लियरिङ्ग फाँट

यस फाँटबाट यस क्षेत्रमा रहेका विभिन्न बैंक तथा वित्तीय संस्थाहरूको अन्तरबैंक हिसाव राफसाफ गर्ने कार्य हुन्छ । यस  कार्यालयमा ४३ वटा (२०६८ चैत मसान्तमा) बैंक तथा वित्तीय संस्था क्लियरिङ्ग सदस्य रहेका छन् । क्लियरिङ्ग सदस्यहरू मध्ये ‘क’ वर्गका वाणिज्य बैंकको संख्या २९, ‘ख’  वर्गका विकास बैंकको संख्या ११ र ‘ग’ वर्गका वित्त कम्पनीको संख्या ३ रहेको छ । ‘ख’ वर्गका विकास बैंक मध्ये गोरखा विकास बैंक र क्यापिटल मर्चेन्ट बैंकिङ एन्ड फाइनान्सको सदस्यता हाल निलम्बित अवस्थामा छ । यसरी समग्रमा यस कार्यालय मार्फत् हाल कुल ४१ वटा बैंक तथा वित्तीय संस्था क्लियरिङ्गमा सहभागी भइरहेका छन् ।

## २.२ मुद्रा व्यवस्थापन एकाइ

यस एकाइबाट यस क्षेत्रका नोट कोषहरूमा आवश्यकता बमोजिम नोटको मौज्दात कायम राख्ने, ती कोषहरूको नियमित अनुगमन तथा निरीक्षण गर्ने, जम्मा हुन आएका नोटहरू बुझी गन्ती गरी ढुकुटीमा दाखिला गर्ने, झुत्रा तथा पुनः प्रयोगमा ल्याउन नसकिने नोट धुल्याउने लगायतका कार्य हुने गर्दछन् ।

### *नोटकोष*

नेपाली नोटको सहज आपुर्तिको लागि यस क्षेत्रका वाणिज्य बैंकहरूका शाखा कार्यालयहरूमा नोटकोषहरू सञ्चालनमा रहेकाछन् । यस कार्यालय अन्तर्गत राष्ट्रिय वाणिज्य बैंकको भरतपुर, गौर, तथा कलैया शाखा कार्यालयमा र नेपाल बैंक लि. सिटी अफिस हेटौडामा गरी जम्मा चारवटा नोटकोषहरू सञ्चालनमा छन् । मुद्रा व्यवस्थापन एकाइद्वारा यस आ.व.मा २ वटा नोटकोषको निरीक्षण कर्य सम्पन्न गरेको छ । वार्षिक कार्ययोजना अनुसार नै नोटकोषको नियमित अनुगमन गर्ने गरिन्छ ।

### *तोडा चलान*

यस कार्यालयबाट यस क्षेत्रको नोटकोष सञ्चालन भएका वाणिज्य बैंकहरूमा यस वर्ष ६२ पटक तोडा चलान (Fund Transfer) भई कुल रु.६ अर्ब ८५ करोड बराबरको नोटकोषको रकम पठाइएको देखिन्छ । यस कार्यालयबाट नोटकोष रहेका वाणिज्य बैंकका कार्यालयहरूका अतिरिक्त नेपाल राष्ट्र बैंकका जिल्ला स्थित

कार्यालय, बैंकिङ कार्यालय तथा मुद्रा व्यवस्थापन विभागमा समेत मुद्रा व्यवस्थापन विभागको निर्देशन बमोजिम नोटकोष हिसाबको रकम तोडा चलान हुने गरेको छ । यस कार्यालयबाट यस वर्ष उल्लिखित कार्यालयहरूमा विभिन्न मितिमा गरी कुल रु. ८ अर्ब ७३ करोड बराबरको नोटकोष हिसाबको रकम पठाइएको थियो । यसरी समग्रमा यस वर्ष रु. १५ अर्ब ५८ करोड बराबरको नोटकोष हिसाबको रकम तोडा चलान भएको थियो । यस वर्ष विभिन्न दरका रु.१ अर्ब ४७ करोड ५० लाख बराबरको स्टक नोट मुद्रा व्यवस्थापन विभाग तथा जिल्ला स्थित कार्यालयमा यस कार्यालयबाट ट्रान्सफर भएको थियो ।




विदेशबाट मुद्रण/टकमरी भई आएका अनिष्कासित बैंक नोट/सिक्का यस कार्यालयबाट मुद्रा व्यवस्थापन विभागको निर्देशन बमोजिम नेपाल राष्ट्र बैंकको जिल्ला स्थित कार्यालय तथा केन्द्रीय कार्यालयमा पठाउने गरिन्छ । यस वर्ष यस कार्यालयबाट यस बैंकका काठमाडौं, विराटनगर, जनकपुर, पोखरा र नेपालगञ्जमा अवस्थित कार्यालयहरूमा विभिन्न दरका रु. १२ अर्ब २ करोड २० लाख बराबरको अनिष्कासित बैंक नोट पठाइएको छ । त्यसैगरी यस वर्ष यस कार्यालयबाट ती कार्यालयहरूमा विभिन्न समयमा रु.१ र २ दरको गरी कुल रु.६५ करोड २८ लाख ९० हजार बराबरको सिक्का पठाइएको छ । यस वर्ष यस कार्यालयबाट धनगढी बाहेक सबै स्थानका नेपाल राष्ट्र बैंकका कार्यालयहरूमा फण्ड ट्रान्सफर भएको छ ।

## ***नोट जलान***

झुत्रो मैलो भई चलन चल्तीमा पठाउन अनुपयुक्त हुने विभिन्न दरका नोटहरूलाई नियमित रूपमा नियमानुसार जलाउने गरिन्छ । नोट जलाउने कार्यको लागि यस कार्यालयको व्यवस्थापकको संयोजकत्वमा मुद्रा व्यवस्थापन एकाइ हेर्ने नायव व्यवस्थापक तथा सहायक व्यवस्थापक र जिल्ला स्थित कोष तथा लेखा नियन्त्रक कार्यालयको प्रतिनिधि रहेको चार सदस्यीय नोट जलान समिति हुन्छ । यस वर्ष उक्त समितिको ७८ वटा बैठक बसी विभिन्न दरको रु. ४ अर्ब १९ करोड ३१ लाख ७४ हजार ३ सय ३६ बराबरको नोट जलान गरिएको छ । गत वर्ष नोट जलान समितिको ७१ वटा बैठक बसी विभिन्न दरको हुन आउने रु. १ अर्ब ६ करोड ७१ लाख ७३ हजार ५ सय ७० बराबरको नोट जलान गरिएको थियो । यस वर्ष सबै भन्दा बढी रु. ५०० को ३० लाख २२ हजार ६६१ थान र सबै भन्दा कम रु.२५० को ७ हजार १ सय ३७ थान नोट जलान गरिएको छ ।

## २.३ आन्तरिक प्रशासन एकाइ

यस एकाइमा कर्मचारी सम्बन्धी विभिन्न अभिलेख राख्ने, लेखा सम्बन्धी कामकारबाही गर्ने प्रशासनिक कार्य लगायत वार्षिक कार्ययोजना तर्जुमा तथा कार्यान्वयन र कार्यालयको बजेट तयार गर्ने कार्य गरिन्छ ।

***कार्यालयको भौतिक अवस्थामा सुधार***

यस वर्ष कार्यालयको भौतिक अवस्थामा सुधारको लागि अधिकृत निवासमा ट्रान्सफरमर जडान र आवश्यक वाइरिङ्ग गर्ने, कार्यालय भित्र रहेको जेनेरेटरको लाइनलाई अधिकृत निवास तथा अतिथि गृहसम्म विस्तार गर्ने, आर्मी भान्छाकोठा र नेपाली सेनाको पोष्टपति निवासको छाना मर्मत गर्ने, व्यवस्थापक निवासको झ्याल ढोका मर्मत गर्ने, कार्यालय भवनको भित्री भाग र व्यवस्थापक आवास गृहको बाहिरी भाग एवम् कार्यालयका सम्पूर्ण झ्याल ढोका र झ्यालको फलाम फ्रेममा रङ्ग रोगन तथा इनामेल पेन्ट लगाउने कार्य सम्पन्न भएको छ ।

यस कार्यालयको सुरक्षालाई मध्य नजर राख्दै केन्द्रीय कार्यालय, सामान्य सेवा विभागको समन्वयमा कार्यालयमा हुने गतिविधिलाई यसै वर्ष देखि सि.सि.टि.भि (क्लोज सर्किट टेलिभिजन) क्यामराबाट अनुगमन गर्ने कार्य शुरूआत भएको छ । सि.सि.टि.भि. क्यामराले बैंकका विभिन्न फाँट तथा स्थानमा भएका गतिविधिको रेकर्ड गर्ने व्यवस्था मिलाइएको छ ।

***तालिम तथा गोष्ठी***

यस आर्थिक वर्षको चैत मसान्त सम्ममा यस कार्यालयबाट विभिन्न विषयका कुल २२ वटा तालिम, गोष्ठी, सेमिनार आदिमा कुल ३५ जना कर्मचारीको सहभागिता भएको थियो । तालिम, गोष्ठी, सेमिनारको विवरण देहाय बमोजिमको रहेको छ ।

| सि.नं. | तालिम /सेमिनार/ गोष्ठीको शीर्षक | स्थान | सहभागी कर्मचारी संख्या | | |
|---|---|---|---|---|---|
| | | | अधिकृत | सहायक | का.स.□ |
| १ | Primary & Secondary Market Operation in Management | काठमाडौँ | १ | | |
| २ | अनुसन्धान मार्गदर्शन २०६८ | काठमाडौँ | २ | | |
| ३ | Management Development Program | काठमाडौँ | १ | | |
| ४ | IT Infrastructure: User Training | काठमाडौँ | १ | | |
| ५ | Risk Management in NRB | सिद्धार्थनगर | | १ | |
| ६ | Pre-Service Training | नेपालगञ्ज | | ३ | |
| ७ | GL Software: Key User Training & Workshop | काठमाडौँ | | २ | |
| ८ | Pre-Service Training | पोखरा | | ५ | |
| ९ | Procurement Management | विराटनगर | १ | | |
| १० | Cash Management | विराटनगर | २ | | |
| ११ | नेपालमा कृषि क्षेत्रको विकासमा वित्तीय सेवाको अवस्था: चुनौती र संभावना | काठमाडौँ♣ | १ | | |
| १२ | Note Kosh Inspection, Fund Transfer & Account Settlement | सिद्धार्थनगर | २ | | |
| १३ | Quality Enhancement to Support Staff | सिद्धार्थनगर | | | १ |
| १४ | Macro Economic Forecasting Technique | काठमाडौँ | १ | | |
| १५ | Risk Based Supervision | काठमाडौँ | १ | | |
| १६ | Monetary & Fiscal Management | काठमाडौँ | १ | | |
| १७ | Central Banking | विराटनगर | | १ | |
| १८ | सफा नोट नीति, जाली नोट पहिचान एवम् नोटकोष सञ्चालन | जनकपुर♥ | २ | | |
| १९ | Budgeting & Planning in NRB | नेपालगञ्ज | १ | | |
| २० | Central Banking | पोखरा | | १ | |
| २१ | International Conference on Economic and Finance | काठमाडौँ♠ | १ | | |
| २२ | Customer Service and Orientation Programme | पोखरा | | १ | |
| | कुल सहभागी | ३३ | १८ | १४ | १ |

□कार्यालय सहयोगी

♣ अनुसन्धान विभागको आयोजनामा सञ्चालित उच्च स्तरीय गोष्ठी

♥ मुद्रा व्यवस्थापन विभागको आयोजनमा सञ्चालित

♠ अनुसन्धान विभागको आयोजनामा सञ्चालित

यस वर्ष तालिम, गोष्ठी वा अन्तरक्रियामा कार्यरत अधिकृतहरूको ९० प्रतिशत, सहायक कर्मचारीहरूको ३८ प्रतिशत, कार्यालय सहयोगी कर्मचारीको २० प्रतिशत र कुल कर्मचारीको ५८ प्रतिशतको सहभागिता रहेको थियो ।

## *वैदेशिक तालिमको विवरण*

यस  वर्ष केन्द्रीय कार्यालयको मनोनयनमा यस कार्यालयबाट (प्रत्येक विषयमा एक जनाको दरले) कुल पाँच जना अधिकृतहरू देहाय बमोजिमको वैदेशिक तालिम, गोष्ठी, सेमिनार आदिमा सहभागी भएका थिए ।

| सिं नं. | विषय | मिति | देश | आयोजक |
|---|---|---|---|---|
| १. | Leaving with Capital Flow & Excess Liquidity: Accessing Effectiveness of Monetary Policy in SEACEN Economics | August 14 to 16, 2011 | Malaysia | SEACEN# Center |
| २. | Macro Economic: Management Financial Sector Issue | Sept. 11 to 23, 2011 | Malaysia | SEACEN Center |
| ३. | Management of Rural Financing Infrastructure and Co- operative for Rural Development | Nov. 14 to 18, 2011 | India | CICTAB♠ |
| ४. | Financial Programing Policies | Jan. 9 to 20, 2012 | Singapore | IMF-STI▣ |
| ५. | 23 SEACEN FSI- Regional Semianr on Bassel II/III Pillar 2 | March 12 to 15, 2012 | Philippines | SEACEN Center |

# South East Association Central Banks
♠Centre for International Cooperation in Agricultural Banking
▣ International Monetary Fund – Singapore Training Institute

## *तहगत कर्मचारी संख्या*

वीरगञ्ज कार्यालयमा २०६८ चैत मसान्तमा कार्यरत स्थायी कर्मचारीहरूको तहगत विवरण देहाय बमोजिम रहेको छ ।

| सि.नं. | कर्मचारीको पद | स्तर | श्रेणी | संख्या | कुल |
|---|---|---|---|---|---|
| १ | व्यवस्थापक | अधिकृत | प्रथम | १ | २० |
| २ | नायव व्यवस्थापक | | द्वितीय | ३ | |
| ३ | सहायक व्यवस्थापक | | तृतीय | १६ | |
| ४ | प्रधान सहायक | सहायक | प्रथम | ४ | ३२ |
| ५ | प्रधान चालक | | प्रथम | १ | |
| ६ | सहायक | | द्वितीय | २० | |
| ७ | उप सहायक | | तृतीय | ५ | |
| ८ | वरिष्ठ चालक | | तृतीय | १ | |
| ९ | कालिगढ | | चौथो | १ | |
| १० | कार्यालय सहयोगी प्रथम | कार्यालय सहयोगी | | १ | ५ |
| ११ | कार्यालय सहयोगी द्वितीय | | | २ | |
| १२ | कार्यालय सहयोगी तृतीय | | | २ | |
| कुल कर्मचारी संख्या | | | | ५७ | |

### *अस्थायी तथा करारमा कार्यरत कर्मचारीहरूको विवरण*

| सि.नं. | पद | समूह | संख्या | कैफियत |
|---|---|---|---|---|
| १ | प्रबन्ध रक्षक | सुरक्षा | १ | अस्थायी |
| २ | सिपाही | सुरक्षा | ४ | |
| ३ | करारमा कार्यरत | | ४ | |
| ४ | दैनिक ज्यालादारी | | १ | |
| | | कुल | १० | |

## *नियुक्ति, सरुवा, बढुवा तथा अवकाश*

यस वर्ष यस कार्यालयमा नौ जना सहायक द्वितीय कर्मचारीहरूको खुल्ला प्रतिस्पर्धाबाट नियुक्ति भयो । त्यस्तै जनशक्ति व्यवस्थापन विभागले यसै वर्ष नव नियुक्त चार जना अधिकृतहरूलाई यस कार्यालयमा पदस्थापना

गरेको थियो । यस वर्ष यस कार्यालयमा बढुवा भएका, सरुवा भई आएका, सरुवा भई गएका र अनिवार्य अवकाश पाएका कर्मचारीहरूको विवरण देहाय बमोजिम रहेको थियो ।

| सि.नं. | विवरण | स्थायी कर्मचारीको स्तर तथा श्रेणी | | | | | | | करार | कुल |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | | अधिकृत | | | सहायक | | | | सिपाही | |
| | | प्रथम | द्वितीय | तृतीय | प्रथम | द्वितीय | तृतीय | चतुर्थ | | |
| १. | बढुवा | - | ३ | २ | - | - | - | - | | ५ |
| २. | सरुवा भई आएका | १ | - | २ | २ | - | १ | - | ३ | ७ |
| ३. | सरुवा भई गएका | १ | ३ | ५ | २ | - | ३ | - | २ | १६ |
| ४. | अवकाश | - | - | - | - | - | - | १ | - | १ |

***दीर्घसेवा पदक***

यस कार्यालयमा कार्यरत कार्यालय सहयोगी द्वितीय श्री हरिन्दर मेस्तरलाई नेपाल राष्ट्र बैंकको ५७ औं वार्षिक उत्सवको अवसरमा काठमाडौंमा आयोजित विशेष कार्यक्रममा २० वर्षे दीर्घसेवा पदक प्रदान गरिएको थियो ।

## २.४ अनुसन्धान एकाइ

***अध्ययन***

यस कार्यालयको अनुसन्धान एकाइबाट विभिन्न अध्ययनहरू जस्तैः यस क्षेत्रको आर्थिक अध्ययन (वार्षिक तथा अर्धवार्षिक), सम सामयिक विषयको विशेष अध्ययन, सहकारी संस्थाहरूको कर्जा लगानी पूर्व सम्भाव्यता अध्ययन र कर्जा सदुपयोगिता अध्ययन तथा अनुसन्धान विभाग तथा अन्य विभागको अनुरोधमा समसामयिक विषयमा संक्षिप्त अध्ययन आदि हुने गरेको छ ।

यस वर्ष नारायणी अञ्चलको दुईवटा आर्थिक प्रतिवेदन अध्ययन गरिएको छ । **वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८** यस आ.व.को पहिलो त्रयमास भित्र सम्पन्न भएको थियो भने **अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९** यस आ.व.को तेस्रो त्रयमासमा सम्पन्न भई निर्धारित समयमा अनुसन्धान विभागमा पठाइएको छ ।

त्यस्तै, यस वर्षको वार्षिक कार्ययोजनामा दुईवटा विशेष अध्ययनहरू राखिएको थियो । पहिलो अध्ययन कुखुरा पालनसँग सम्बन्धित थियो जसको शीर्षक **"चितवन जिल्लामा कुखुरा पालनः वर्तमान अवस्था र यसको आर्थिक अन्तरसम्बन्ध"** थियो । पशुपालनको विकास र विस्तारमा दुग्ध सहकारीले खेलेको भूमिकाको बारेमा दोस्रो अध्ययन गरिएको थियो । यस अध्ययनको लागि मकवानपुर जिल्लामा रहेका दुग्ध सहकारीहरूको अध्ययन गरिएको थियो । यस अध्ययनको शीर्षक **"मकवानपुर जिल्लामा दुग्ध सहकारीताः वर्तमान अवस्था र प्रवर्द्धनको सम्भावना"** थियो । दुवै अध्ययनहरूको संक्षिप्त प्रतिवेदन यसै पत्रिकाको तेस्रो अंशमा राखिएको छ भने पूर्ण प्रतिवेदन कार्यालयमा उपलब्ध छ ।

यस वर्ष लघुवित्त प्रवर्द्धन तथा सुपरिवेक्षण विभागको विभिन्न मितिको पत्रानुसार पाँचवटा सहकारी संस्थाहरूको कर्जा लगानी पूर्व सम्भाव्यता अध्ययन सम्पन्न गरी लघुवित्त सुपरिवेक्षण विभागमा प्रतिवेदन पठाइएको छ । त्यसैगरी, यस वर्ष *"नेपालमा बचत तथा ऋण सहकारी संस्थाहरूको वित्तीय कारोबार मापन र नेपालमा ढुकुटी कारोबारको अवस्था", "घर जग्गाको कारोबार वर्तमान अवस्था"* र *"मासु प्रशोधन उद्योग"* विषयक तीनवटा संक्षिप्त अध्ययन (Quick Study) सम्पन्न गरी सोको अध्ययन प्रतिवेदन अनुसन्धान विभागमा पठाइएको छ ।

## *तथ्याङ्क*

यस एकाइबाट वैदेशिक व्यापार सम्बन्धी, सरकारी राजस्व तथा खर्च सम्बन्धी, मनीचेञ्जरको भारतीय मुद्राको कारोबार सम्बन्धी र सीमावर्ती बजारको मूल्य सम्बन्धी तथ्याङ्क तोकिएको समयावधिमा निर्दिष्ट विभागमा पेश गर्ने गरिन्छ ।

प्रत्येक महिना वीरगञ्ज भन्सार कार्यालय तथा सिर्सिया सुख्खा बन्दरगाहबाट वैदेशिक व्यापार (आयात तथा निर्यात) सम्बन्धी तथ्याङ्क प्राप्त गरी तोकिएको ढाँचामा संयोजन तथा तालिकीकरण गरी प्रशोधित तथ्याङ्कलाई प्रत्येक महिनाको २० गते भित्र अनुसन्धान विभागको शोधानान्तर महाशाखामा पठाइन्छ ।

त्यसैगरी, यस क्षेत्रका सरकारी कारोबार गर्ने बैंकहरूबाट प्रत्येक शुक्रबार तथा प्रत्येक महिनाको मसान्तसम्मको सरकारी राजस्व तथा खर्चको तथ्याङ्क प्राप्त गरी उक्त तथ्याङ्कहरूलाई तालिकीकरण गरी प्रत्येक आइतबार र प्रत्येक महिनाको १ गते थापाथली स्थित बैंकिङ कार्यालयको केन्द्रीय लेखा फाँटमा पठाउने गरिन्छ ।

यस क्षेत्रमा रहेका वाणिज्य बैंक, मनिचेञ्जर तथा यस बैंक मार्फत् भएको भारतीय मुद्राको खरिद तथा बिक्रीको विवरण प्रत्येक महिनाको २० गते भित्रमा अनुसन्धान विभागको शोधानान्तर महाशाखामा पठाउने गरिन्छ ।

त्यस्तै, सीमावर्ती बजारको मूल्य सम्बन्धी अध्ययनको लागि भारतको मुजफ्फरपुर सहरबाट प्रत्येक नेपाली महिनाको अन्तिम सप्ताहमा तोकिएको वस्तु तथा सेवाको मूल्य संकलन गरी विश्लेषण सहित सोही महिनामा अनुसन्धान विभागको मूल्य महाशाखामा पठाउने गरिन्छ ।

## *अन्तरक्रिया कार्यक्रम*

यस कार्यालयमा मिति २०६८/०८/१६ गते 'क' वर्गका बैंकहरूसँग ***Meet the Bankers*** विषयक एक दिने अन्तरक्रियात्मक कार्यक्रम सम्पन्न गरिएको थियो । वीरगञ्ज उपमहानगरपालिका भित्र शाखा कार्यालय रहेका सम्पूर्ण वाणिज्य बैंकहरूलाई आमन्त्रण गरिएको उक्त अन्तरक्रियामा यस क्षेत्रका २४ वटा बैंकको सहभागिता रहेको थियो । उक्त कार्यक्रममा अनुसन्धान एकाइका तर्फबाट यस क्षेत्रको आर्थिक तथा वित्तीय परिसूचकको ***Key Notes*** प्रस्तुत भए पछि छलफल शुरू भएको थियो । सो अन्तरक्रियामा सहभागी बैंकका अधिकांश प्रतिनिधिहरूले ***Demand Draft*** र प्रतितपत्र, प्रज्ञापनपत्रको प्रयोग, भारतीय रुपैयाँको अत्याधिक मागले सिर्जना गरेको समस्या, बैंकिङ कारोबार लगायतका विभिन्न विषयमा छलफल गरेका थिए । अन्त्यमा, कार्यक्रमका सभापति तथा यस कार्यालयका व्यवस्थापकबाट बैंकका सहभागी प्रतिनिधिहरूले उठाएका विषयहरूको बारेमा आफ्नो धारणा व्यक्त गर्दै कार्यक्रमको समापन भएको थियो ।

## *तालिम /अन्तरक्रिया/ गोष्ठी*

यस कार्यालयमा यस वर्ष बैंकर्स प्रशिक्षण केन्द्र (Bankers Training Center), अनुसन्धान विभाग, र विदेशी विनिमय व्यवस्थापन विभागको संयोजनमा समेत विविध विषयमा अन्तरक्रिया, तालिम, गोष्ठी सञ्चालन भएका थिए ।

बैंकर्स प्रशिक्षण केन्द्रको संयोजकत्वमा यस कार्यालयमा मिति २०६८/१०/०८ देखि १०/०९ सम्म सञ्चालन भएको ***Banking Fraud and Forgery*** विषयक २ दिने र मिति २०६८/१०/११ देखि १०/१३ सम्म सञ्चालन भएको ***Basel II*** विषयक २ दिने तालिममा यस क्षेत्रका बैंक तथा वित्तीय संस्थाका प्रतिनिधिहरू सहभागी रहेका थिए ।

विदेशी विनिमय व्यवस्थापन विभागको संयोजकत्वमा मिति २०६८/१२/१० मा आयोजना भएको ***विदेशी विनिमय व्यवस्थापन*** सम्बन्धी एक दिने अन्तरक्रिया कार्यक्रममा यस क्षेत्रका बैंक तथा वित्तीय संस्था, उद्योग वाणिज्य संघका प्रतिनिधि र मनीचेञ्जरका प्रतिनिधिको सहभागिता रहेको थियो ।

यस कार्यालयको सभाहलमा नेपाल राष्ट्र बैंक अनुसन्धान विभागको संयोजकत्वमा मिति २०६८/१२/२० मा एक दिने ***पूर्व-बजेटकालीन अन्तरक्रिया कार्यक्रम*** सम्पन्न भएको थियो । उक्त कार्यक्रममा उद्योग वाणिज्य संघ, बैंक तथा वित्तीय संस्था, कृषि विकास कार्यालय, पशु विकास कार्यालय, नेपाल विद्युत् प्राधिकरण, मनीचेञ्जरका प्रतिनिधि, प्राध्यापक, पत्रकार, कृषक आदिको सहभागिता रहेको थियो ।

# ३ विशेष अध्ययन (संक्षिप्त प्रतिवेदन )

नेपाल राष्ट्र बैंक, वीरगञ्ज कार्यालयद्वारा सम्पन्न गरिएका विशेष अध्ययनहरूको संक्षिप्त प्रतिवेदन देहाय बमोजिम रहेको छ ।

## क. चितवन जिल्लामा कुखुरापालन : वर्तमान अवस्था र आर्थिक अन्तरसम्बन्ध

### १ परिचय

### १.१ पृष्ठभूमि

नेपालमा विगत पच्चीस वर्षदेखि व्यवसायिक रूपमा सुरु भएको कुखुरापालन व्यवसायले आय र रोजगारी सृजना गर्न उल्लेख्य भूमिका खेलेको छ । कम लगानीमा घरमा नै सुरु गरी राम्रो मुनाफा आर्जन गर्न सकिने भएकोले यो व्यवसाय हरेक वर्ष विस्तार हुदै गइरहेको छ । नेपाल कुखुरा व्यवसायी मञ्चका अनुसार हाल कुखुरापालन व्यवसायले नेपालको कुल गार्हस्थ्य उत्पादनमा करिब ३ प्रतिशत तथा कुल कृषि उत्पादनमा ८ प्रतिशत अंश ओगटेको अनुमान गरिन्छ भने चितवन जिल्लामा मात्र यस व्यवसायले कुल १८ हजार व्यक्तिलाई रोजगारी प्रदान गरेको अनुमान गरिन्छ । कृषि मन्त्रालय तथा जिल्ला कृषि कार्यालयबाट प्राप्त तथ्याङ्क अनुसार नेपालमा हुने कुल मासुको उत्पादनमा कुखुराको मासुको अंश करिब ७ प्रतिशत रहेकोमा चितवन जिल्लामा कुखुराको मासुको उत्पादनले जिल्लाको कुल मासु उत्पादनको करिब २८ प्रतिशत अंश ओगटेको देखिन्छ । नेपाल कुखुरा व्यवसायी मञ्चका अनुसार देशको कुल उत्पादन मध्ये चितवन जिल्लामा लेयर्स चल्ला उत्पादन करिब ९८ प्रतिशत, ब्रोइलर चल्ला उत्पादन करिब ४० प्रतिशत, अण्डा उत्पादन करिब ६० प्रतिशत तथा मासु उत्पादन करिब २० प्रतिशत हुने गरेको छ । नेपालमा कुल ९८ वटा ह्याचरी फर्महरू रहेकोमा चितवन जिल्लामा ४६ वटा फर्महरू रहेका छन् । त्यसै गरी कुल १११ वटा दाना उद्योगहरू मध्ये चितवन जिल्लामा १६ वटा रहेका छन् । यसबाट नेपालमा कुखुरापालन व्यवसायको विकास एवम् विस्तारमा चितवन जिल्लाको ठूलो योगदान रहेको देखिन्छ । कुखुरापालन व्यवसायको विस्तारसँगै यसको ब्याकवार्ड लिंकेज भएका ह्याचरी फर्म, दाना उद्योग, एग्रो भेट जस्ता व्यवसायहरू एवम् सप्लायर्स, कोल्ड स्टोरेज, मासु बिक्रेताहरू जस्ता फरवार्ड लिंकेज भएका व्यवसायहरूको समेत विकास एवम् विस्तार हुदै गएको देखिन्छ ।

### १.२ अध्ययनको उद्देश्य

यो अध्ययन मुख्य रूपमा चितवन जिल्लामा भइरहेको कुखुरापालन व्यवसायको अध्ययन भएकोले यसका निम्न उद्देश्यहरू तय गरिएको छ ।

१. चितवन जिल्लाको कुखुरापालन व्यवसायको वर्तमान अवस्थाको चित्रण गर्ने ।

२. कुखुरापालन व्यवसायको ब्याकवार्ड तथा फरवार्ड लिंकेज सम्बन्धी अध्ययन गर्ने ।

३. चितवन जिल्लाको कुखुरापालन व्यवसायले राष्ट्रिय अर्थतन्त्रमा पारेको प्रभाव बारे अध्ययन गर्ने ।

### १.३ अध्ययनको औचित्य

यस कार्यालयको कार्यक्षेत्रमा पर्ने चितवन जिल्ला कुखुरापालन व्यवसायको लागि नेपालकै प्रमुख स्थानको रूपमा परिचित भइसकेको छ । कृषि नै प्रमुख पेशाका रूपमा रहेको यस क्षेत्रमा यसरी फस्टाउँदै गएको यस व्यवसायको वर्तमान अवस्था कस्तो छ ? यसका समस्या र चुनौती के के हुन् ? यसले रोजगारी र आम्दानीमा के कस्तो प्रभाव परेको हुन्छ ? यो व्यवसायसँग सम्बन्धित अन्य व्यवसायहरू के के हुन ? यो व्यवसायबाट अर्थतन्त्रमा कस्तो टेवा पुगेकोछ ? भन्ने जस्ता विषयहरू सरकारको आर्थिक सल्लाहकारको भूमिका निर्वाह गर्ने निकायले जानकारी राख्नु आवश्यक भएकोले नै यस कार्यालयले यो अध्ययनलाई यस आर्थिक वर्षको कार्य योजनामा राखेको हो ।

### १.४ अध्ययनका सीमाहरू

चितवन जिल्लामा कुखुरापालनः वर्तमान अवस्था र आर्थिक अन्तरसम्बन्ध विषयक अध्ययन निम्न सीमाहरू अन्तरगत रहेर गरिएको छ ।

क) नेपालको समग्र कुखुरापालन व्यवसायलाई नहेरी चितवन जिल्लामा मात्र सीमित रहेको छ ।

ख) अध्ययन कृषि पेशामा आधारित भएको र अधिकांश कृषकहरूले व्यवसायीकरूपमा व्यवसाय दर्ता गरी कुखुरापालन नगर्ने र वार्षिक प्रतिवेदनहरू पनि सहीरूपमा तयार गरेको उपलब्ध नभएको हुँदा सीमित किसिमका प्रमुख तथ्याङ्कहरू मात्र संकलन गरिएको छ । साथै, पुराना तथ्याङ्कहरू उपलब्ध नभएको कारण अध्ययनमा विगत तीन वर्षको तथ्याङ्क मात्र समावेश गरिएकोछ ।

ग) अध्ययन गर्न दुई जना अधिकृतलाई जम्मा छ कार्य दिन मात्र खटाइएकोले सीमित स्रोत र समयका कारण प्रश्नावली सर्वेक्षण र स्ट्रक्चर्ड अन्तर्वार्ता लिइने व्यवसायीहरूको संख्या सीमित हुन गएको छ ।

## ३ अनुसन्धान विधि

### ३.१ तथ्याङ्क स्रोत

यस अध्ययनमा आवश्यक पर्ने तथ्याङ्क तथा जानकारी प्राथमिक तथा द्वितीय दुवै स्रोतबाट प्राप्त गरिएको छ । व्यवसायीसँग सम्बन्धित प्राथमिक तथ्याङ्क मूलतः स्थलगत भ्रमण, अवलोकन, प्रश्नावली सर्वेक्षण, स्ट्रक्चर्ड अन्तर्वार्ता तथा छलफल विधिबाट संकलन गरिएको छ भने कुखुरापालन व्यवसायसँग सम्बन्धित अन्य तथ्याङ्कहरू द्वितीय स्रोत जिल्ला कृषि विकास कार्यालय, जिल्ला पशु सेवा कार्यालयका प्रकाशन एवम् इन्टरनेटका विभिन्न साइटमा राखिएका सन्दर्भ सामाग्रीहरू तथा व्यवसायीहरूले उपलब्ध गराएको प्रकाशनहरूबाट संकलन गरिएको छ ।

### ३.२ तथ्याङ्क संकलन विधि

प्रस्तावित अध्ययन मुख्यतः प्राथमिक तथ्याङ्कमा आधारित भएकोले देहाय बमोजिमको तथ्याङ्क संकलन विधि प्रयोग गरिएकोछ ।

१. कुखुरा पालन व्यवसायीहरूसँग छलफल साथै प्रश्नावली अनुसारको सर्वेक्षण ।

२. कुखुरा पालन व्यवसायीसँग अन्तर-सम्बन्ध भएका अन्य व्यवसायीहरूसँग छलफल साथै प्रश्नावली अनुसारको स्ट्रक्चर्ड अन्तर्वार्ता ।

३. कुखुरा पालन व्यवसायसँग सम्बन्धित संघ, समिति आदिका प्रतिनिधिहरूसँग छलफल साथै प्रश्नावली अनुसारको स्ट्रक्चर्ड अन्तर्वार्ता ।

तथ्याङ्क संकलनको लागि Random Sampling को आधारमा तल प्रस्तुत गरिएको संख्यामा sample छनौट गरिएको छ ।

| प्रश्नाबली सर्वेक्षण | | | |
|---|---|---|---|
| क सं | विवरण | अनुमानित फर्म संख्या | sample size |
| १ | लेयर्स कुखुरापालन | ५०० | १० |
| २ | ब्रोइलर कुखुरापालन | १००० | २० |
| स्ट्रक्चर्ड अन्तर्वार्ता | | | |
| ३ | लेयर्स ह्याचरी फर्म | ६ | ४ |
| ४ | ब्रोइलर ह्याचरी फर्म | ४० | ४ |
| ५ | दाना उद्योग | १६ | ३ |
| ६ | एग्रो भेट | | २ |
| ७ | कुखुरा बजार व्यवस्थापक | | ३ |
| ८ | संघ समितिका प्रतिनिधि | | ३ |
| ९ | अन्य | | ५ |
| | | जम्मा | ५४ |

## ३.३ विश्लेषण विधि

प्रश्नावली सर्वेक्षणबाट प्राप्त जानकारीहरूलाई तालिकीकरण गरी सामान्य तथ्याङ्कीय विश्लेषण गरिएको छ भने अन्तर्वार्ता/छलफलबाट प्राप्त प्रतिक्रियालाई संक्षेपीकरण गरी विश्लेषण गरिएको छ । त्यसैगरी यस क्षेत्रबाट अर्थतन्त्रमा पर्ने असरको अध्ययनको लागि राष्ट्रिय स्तरका परिसूचकहरू जस्तैः कुखुरा उत्पादन, अण्डा उत्पादन, पशुजन्य उत्पादन, कुल गाह्रस्थ उत्पादन आदि सँग चितवन जिल्लाका परिसूचकहरूको तुलना गरिएको छ ।

# ४ तथ्याङ्क प्रस्तुतीकरण तथा विश्लेषण

## ४.१ कुखुरापालनको वर्तमान अवस्था

***कुखुराको संख्या***

आ.व. २०६६/६७ को तुलनामा आ.व. २०६७/६८ मा चितवन जिल्लामा मासुको लागि पालिने ब्रोइलर कुखुराको उत्पादनमा १०६.१ प्रतिशतले वृद्धि भएको देखिन्छ भने अण्डा उत्पादन गर्न पालिने लेयर्स कुखुराको संख्यामा ३७ प्रतिशतले वृद्धि भएको देखिन्छ। यो तथ्याङ्कबाट मासुको लागि पालिने ब्रोइलर कुखुराको व्यवसायमा उल्लेख्य वृद्धि भएको पुष्टि हुन्छ। तालिका ४.१ मा चितवन जिल्लामा कुखुराको संख्या सम्बन्धी तथ्याङ्क प्रस्तुत गरिएको छ।

तालिकाः ४.१ चितवन जिल्लामा कुखुराको संख्या

| | आ.व. २०६६/६७ | आ.व. २०६७/६८ | प्रतिशत परिवर्तन |
|---|---|---|---|
| **ब्रोइलर माउ** | १२२,५३४.२ | २८१,४६४.४ | १२९.७ |
| **लेयर्स माउ** | ९०,०६७.९ | ७५,३४९.८ | -१६.३ |
| **व्यवसायिक ब्रोइलर** | ९,८२०,०७१.५ | २०,२३९,२१२.० | १०६.१ |
| **व्यवसायिक लेयर्स** | ३,८९३,०४४.८ | ५,३३३,३५२.० | ३७.० |

*स्रोतः नेपाल कुखुरा व्यवसायी मञ्च*

## उत्पादन

ब्रोइलर कुखुराको संख्यामा भएको उल्लेख्य वृद्धिका कारण कुखुराको मासुको उत्पादन आ.व. २०६६/६७ को तुलनामा आ.व. २०६७/६८ मा ११५.३ प्रतिशतको उच्च दरले वृद्धि भएको देखिन्छ । त्यसै गरी अण्डा उत्पादनमा भने आ.व. २०६७/६८ मा ११.६ प्रतिशतले ह्रास आएको देखिन्छ । यो सम्बन्धी तथ्याङ्क तालिका ४.२ मा प्रस्तुत गरिएको छ ।

तालिका: ४.२ चितवन जिल्लामा कुखुरापालन व्यवसायको उत्पादनको स्थिति

| | आ.व.२०६६/६७ | आ.व.२०६७/६८ | प्रतिशत परिवर्तन |
|---|---|---|---|
| **मासु उत्पादन (के.जी.)** | १७,५२३,१७८.८९ | ३७,७३१,३२१.२५ | ११५.३ |
| **अण्डा उत्पादन (गोटा)** | ७५६,४९५,०६४ | ६६८,७८३,४९३ | -११.६ |

*स्रोत: नेपाल कुखुरा व्यवसायी मञ्च*

चितवन जिल्लामा ब्रोइलर कुखुरा व्यवसायी करिब १ हजारको हाराहारीमा र लेयर्स कुखुरा व्यवसायी करिब ५ सयको हाराहारीमा रहेका छन् । सर्वेक्षण गरिएका कृषकहरूको वर्तमान औसत वार्षिक उत्पादन क्षमता ९,३९० कुखुरा रहेको पाइयो भने औसत क्षमता उपयोग समीक्षा अवधिमा ८३.४ प्रतिशत मात्र रहेको पाइयो । सर्वेक्षण गरिएका कृषकहरूको तथ्याङ्क अनुसार गत आ.व. २०६६/६७ मा औसत उत्पादन ५,७८० कुखुरा रहेको थियो भने आ.व. २०६७/६८ मा ७८४० कुखुरा उत्पादन भएको पाइयो । साथै, सर्वेक्षण गरिएका मध्ये २५ प्रतिशत कृषकहरूले आँउदो वर्ष नयाँ खोर/टहरा निर्माण गरी उत्पादन क्षमतामा वृद्धि गर्ने योजना रहेको बताए भने दुई जना कृषकहरूले भने पहिलेको ठूलो क्षमताबाट घटाइ सानो क्षमतामा कुखुरा पालन गरेको बताए ।

त्यस्तै, समीक्षा अवधिमा लेयर्स कुखुरापालन गरी अण्डा उत्पादन गर्ने कृषकहरूको औसत दैनिक उत्पादन क्षमता ३०,५५० अण्डा रहेको पाइयो भने क्षमता उपयोग ८५.७६ प्रतिशत रहेको पाइयो । सर्वेक्षण गरिएका कृषकहरूको तथ्याङ्क अनुसार गत आ.व. २०६६/६७ मा औसत उत्पादन २३,९५१ अण्डा प्रति दिन थियो भने आ.व. २०६७/६८ मा ९.४ प्रतिशतले वृद्धि भइ प्रति दिन २६,२०० अण्डा उत्पादन भएको पाइयो । साथै, सर्वेक्षण गरिएका मध्ये ९० प्रतिशत कृषकहरूले क्षमता वृद्धि गर्ने योजना नरहेको बताए ।

कुखुराको औसत मृत्युदर लेयर्समा करिब १७ प्रतिशत र ब्रोइलरमा करिब ४ देखि ५ प्रतिशत रहने गरेको जानकारी पाइएता पनि सर्वेक्षण गरिएका किसानहरू मध्ये ८० प्रतिशत कृषकले मृत्युदर यो औसत भन्दा बढी रहने गरेको जानकारी दिए ।

## उत्पादकत्व

मासु उत्पादनतर्फ कन्भर्सन दर अन्तराष्ट्रिय स्तरमा १ के.जि. मासुको लागि १.८ के.जि.दाना खुवाउनु पर्ने र दुई के.जि. मासु तयार हुन जम्मा ३८ दिन लाग्ने देखिएता पनि चितवनको औसत कन्भर्सन दर १:२.० र दुई के.जि. मासु तयार हुन जम्मा ४० दिन लाग्ने गरेको पाइयो । त्यस्तै अन्तर्राष्ट्रिय स्तरमा लेयर्स कुखुराको वार्षिक अण्डा उत्पादन ३०० को हाराहारीमा रहेता पनि चितवन जिल्लाको औसत उत्पादकत्व विगतमा भन्दा क्रमश: वृद्धि भइ सन् २०११ मा २८० रहेको पाइयो । यस तथ्याङ्कबाट उत्पादकत्वमा चितवन जिल्लाले विगतमा भन्दा निकै सुधार गरिसकेको र अझै सुधार गर्नुपर्ने देखिन्छ ।

सर्वेक्षण गरिएका कृषकहरूको भनाइ अनुसार ४० दिनमा कुखुरा तयार भएता पनि कृषकले भनेकै दिनमा कुखुरा बिक्री नहुने र बजार तथा बजार व्यवस्थापन दुवै कमजोर भएकोले धेरै दिनसम्म कुखुरा खोरमै राख्न बाध्य हुनुपर्ने हुँदा धेरै दाना खपत हुने र ४० दिन पछि मासु उत्पादनमा पनि उल्लेख्य वृद्धि नहुने हुँदा एकातर्फ

उत्पादकत्वमा पनि कमी आउने र अर्कोतर्फ उत्पादन लागत पनि बढी हुने गरेको पाइयो । साथै, कृषकहरूको भनाइ अनुसार दानाको गुणस्तर पनि फरक फरक हुने र उपलब्धता पनि फरक हुने हुँदा मासुको उत्पादकत्व दानाको गुणस्तर र दानाको उपलब्धतामा पनि निर्भर रहने गरेको पाइयो ।

***औसत लागत***

स्थिर लागत

कुखुरापालन गर्न जग्गाको लागत बाहेक खोर/टहरा बनाउँदा १० वर्ष अवधिसम्म रहन सक्ने पक्की खोर निर्माण गर्न प्रति वर्ग फिट रु.४०० लाग्ने व्यवसायीहरू बताउछन् । एउटा ब्रोइलर कुखुरालाई औसत एक वर्ग फिट र एउटा लेयर्स कुखुरालाई औसत २ वर्ग फिट क्षेत्रफल चाहिने पाइयो ।

चालू खर्च

स्थलगत अध्ययनको क्रममा व्यावसायी तथा विज्ञहरूसँग गरिएको छलफलको आधारमा चितवन जिल्लामा १००० वटा कुखुरा रहेको फार्मको औसत लागत गणना गर्दा दुई वर्ष अघि प्रति के.जि. रु.८३ लाग्ने गरेकोमा गत वर्ष यसमा वृद्धि भई रु.९९ पुगेको थियो भने अध्ययन गरिएको समयमा यसमा केही कमी आई रु.९६ रहेको पाइयो ।

तालिका ४.३ प्रति कुखुरा ( १००० कुखुराको फार्म) औसत लागत (रु)

| | आ.व. २०६६/६७ | आ.व. २०६७/६८ | आ.व. २०६८/६९ (हालको औसत) |
|---|---|---|---|
| **चल्ला खरिद** | ३२ | ६० | ४५ |
| **दाना खरिद** | ११६ | १२० | १२८ |
| **औषधि** | ५ | ५ | ५ |
| **अन्य खर्च** | १० | १० | १० |
| **कामदार खर्च** | ९ | ९ | १० |
| **जम्मा खर्च** | १७८ | २१० | २०४ |
| **प्रति के.जि. उत्पादन मूल्य** | ८३ | ९९ | ९६ |

*स्रोत: स्थलगत अध्ययन, छलफल*

**लगानी**

सर्वेक्षण गरिएका ब्रोइलर कुखुरापालक किसान मध्ये अधिकांश कृषकको कुखुरा पालनको लागि प्रयोग भएको जग्गा टहरा आफ्नै स्वामित्वमा रहेको पाइयो भने जम्मा दुई जना कृषकले भाडामा टहराहरू लिएर कुखुरापालन गरेको पाइयो ।

सर्वेक्षण गरिएका कृषकहरूको औसत वार्षिक उत्पादन क्षमता ९,३९० कुखुरा रहेको पाइयो भने यसका लागि औसत लगानी रु. ३.९० लाख रहेको पाइयो । ७० प्रतिशत कृषकले विभिन्न वित्तीय संस्थाबाट कर्जाको उपयोग गरेको पाइयो भने यस्तो कर्जा औसत लगानीको ५५ प्रतिशत रहेको पाइयो ।

लेयर्स कुखुरा पालन गर्ने व्यवसायीहरूले भने ठूलो स्तरमा लगानी गरी ठूलो फार्म स्थापना गरी आधुनिक खोरमा कुखुरा पालन गर्ने गरेको पाइयो । सर्वेक्षण गरिएका कृषकहरूको औसत लगानी रु. २.४१ करोड रहेको पाइयो । ५० प्रतिशत कृषकले विभिन्न बैंक तथा वित्तीय संस्थाबाट कर्जाको उपयोग गरेको पाइयो भने यस्तो कर्जा औसत लगानीको ४१.५७ प्रतिशत रहेको पाइयो ।

## ४.२ कुखुरापालन व्यवसायको ब्याकवार्ड तथा फरवार्ड लिंकेज

यस अध्ययनको प्रयोजनको लागि मासु र अण्डाको लागि गरिने कुखुरापालनको विषयलाई केन्द्रबिन्दु बनाइएकोले ब्याकवार्ड र फरवार्ड लिंकेजलाई यसरी निर्धारण गरिएको छ ।




### ४.२.१ ब्याकवार्ड लिंकेज

**ह्याचरी**

मासु र अण्डाको लागि गरिने कुखुरापालन व्यवसायको लागि आवश्यक चल्लाहरू ह्याचरी व्यवसायले उत्पादन गर्छ । नेपाल कुखुरा व्यवसायी मञ्चबाट प्राप्त तथ्याङ्क अनुसार चितवन जिल्लामा विभिन्न जातका ब्रोइलर र लेयर्स कुखुराका चल्ला उत्पादन गर्ने ह्याचरीहरूको कुल अनुमानित संख्या ४६ रहेको छ । चितवनका ह्याचरीहरूले माउ कुखुरा मलेशिया, जर्मनी, फ्रान्स, थाइल्याण्ड, बेलायत, अस्ट्रेलिया, भारत, कोरिया, फिलिपिन्स लगायत विभिन्न मुलुकबाट एल.सि.को माध्यमबाट आयात गर्ने गरेको व्यवसायीहरूले जानकारी दिए ।

चितवन जिल्लामा आ.व. २०६६/६७ मा ब्रोइलर कुखुराको चल्ला कुल १.०३ करोड उत्पादन भएको थियो भने आ.व.२०६७/६८ मा यसमा उल्लेख्य वृद्धि (१०६.१ प्रतिशत) भइ २.१३ करोड चल्ला उत्पादन भएको देखिन्छ । लेयर्स कुखुराका चल्ला उत्पादन गर्ने ह्याचरीहरूको कुल उत्पादन भने आ.व. २०६७/६८ मा २३.७ प्रतिशतले घटेको देखिन्छ ।

तालिका ४.४ चितवन जिल्लामा चल्ला उत्पादनको स्थिति

| | आ.व.२०६६/६७ | आ.व.२०६७/६८ | प्रतिशत परिवर्तन |
|---|---|---|---|
| **ब्रोइलर चल्ला** | १०,३३६,९१७.३६ | २१,३०४,४३३.८५ | १०६.१ |
| **लेयर्स चल्ला** | ७,०६५,१५५.१६ | ५,३९३,०११.६८ | -२३.७ |

*श्रोतः नेपाल कुखुरा व्यवसायी मञ्च*

स्थलगत अध्ययन र सर्वेक्षणको आधारमा ह्याचरीहरू आधुनिक जातका आयातित माउ कुखुराहरू पालन गरी चल्ला उत्पादन गर्ने भएकाले यस्तो व्यवसाय बढी संवेदनशील हुनुको साथै बढी आधुनिक र व्यवस्थित हुने, बायो सेक्युरिटिमा बढी ध्यान दिने, कामदारको संख्या पनि बढी हुने र लगानी पनि बढी आवश्यक पर्ने गरेको पाइयो । सर्वेक्षण गरिएका ब्रोइलर चल्ला उत्पादन गर्ने ह्याचरीहरूको हालको वार्षिक औसत उत्पादन क्षमता १३.५० लाख चल्ला रहेको पाइयो भने आ.व. २०६७/६८ मा ७१.१६ प्रतिशत औसत क्षमता उपभोग भएको देखिन्छ । सर्वेक्षण गरिएका मध्ये ७५ प्रतिशतले आउँदो वर्षहरूमा क्षमता विस्तार गर्दै लाने योजना रहेको जानकारी दिए । यस्ता ह्याचरी स्थापना गर्न औसत रु. १०.१२ करोड लगानी गरेको पाइयो भने यसको ५१.६१ प्रतिशत अंश बैंक तथा वित्तीय संस्थाहरूसँग लिइएको कर्जा रहेको पाइयो ।

त्यस्तै, सर्वेक्षण गरिएका लेयर्स चल्ला उत्पादन गर्ने ह्याचरीहरूको हालको वार्षिक औसत उत्पादन क्षमता १२.४७ लाख चल्ला रहेको पाइयो भने आ.व. २०६७/६८ मा ४९.५८ प्रतिशत औसत क्षमता उपभोग भएको पाइयो । सर्वेक्षण गरिएका मध्ये ५० प्रतिशतले क्षमता विस्तार गर्ने योजना रहेको जानकारी दिए । यस्ता ह्याचरी स्थापना गर्न औसत रु. ११ करोड लगानी गरेको पाइयो भने औसत लगानीको ५२.३७ प्रतिशत बैंक तथा वित्तीय संस्थाहरूको कर्जा रहेको पाइयो ।

## दाना

चितवन जिल्लामा दाना उत्पादन आ.व. २०६७/६८ मा ११.३ प्रतिशतले वृद्धि भई कुल १.८ लाख मे.टन उत्पादन भएको देखिन्छ । केही ठूला किसानहरूका साथै ग्रुपको रूपमा विकास भइरहेका व्यवसायीहरूले भने कच्चा सामाग्री खरिद गरी दाना आँफै उत्पादन गर्ने गरेको बताउँछन् । यसरी आफै उत्पादन गर्नेहरूले भने अधिकांशले धुलो दाना खुवाउने गरेको पाइयो भने ठूला ग्रुपहरूले र खरिद गरी खुवाउने किसानहरूले भने पेलेट दाना खुवाउने गरेको पाइयो ।

व्यवसायीहरूका अनुसार दाना उत्पादन गर्न आवश्यक धेरैजसो कच्चा पदार्थहरू भारतबाट आयात हुने गरेको छ । छलफलको क्रममा कृषक, व्यवसायी तथा विज्ञहरूको आधारमा नेपालको कच्चा सामाग्रीले करिब दुई महिनाको माग मात्र धान्ने र बाँकी भारतबाट आयात गर्नु पर्ने बाध्यता रहेको पाइयो ।

दानामा मकैको अंश ६० प्रतिशत रहने गर्छ भने भटमासको पिनाको अंश करिब ३० प्रतिशत रहन्छ र सूर्यमुखी तथा तिलको पिना केही मात्रामा प्रयोग हुने गरेको छ । दाना उत्पादन गर्न प्रयोग हुने कच्चा पदार्थहरू मध्ये मकैको करिब ५५ प्रतिशत, भटमासको पीनाको करिब ९९ प्रतिशत, सूर्यमुखी र तिलको पिनाको करिब ९० प्रतिशत हिस्सा भारतबाट आयात हुने गरेको छ । हालको बजार मूल्यमा दानाको कच्चा पदार्थ आयातमा करिब रु. ६.१ अर्ब खर्च भइरहेको छ ।

सर्वेक्षण गरिएका सबै दाना उत्पादकहरूले दुई देखि पाँच वर्ष भित्र क्षमता विस्तार गरी उत्पादनमा उल्लेख्य वृद्धि गर्ने लक्ष्य राखेको पाइयो । उनीहरूको भनाइ अनुसार दानाको माग अत्याधिक रहेको र आधुनिक पेलेट दानाको आपुर्ति कम रहेकोले बिक्री वितरणमा पनि कुनै समस्या नहुने देखियो ।

## एग्रोभेट

नेपाल कुखुरा व्यवसायी मञ्चका अनुसार चितवन जिल्लामा करिब १२० वटा भेटेरिनरी औषधि पसल रहेका छन् ।

एग्रोभेट व्यवसायीहरूसँग गरिएको छलफलको आधारमा कुखुरापालन व्यवसायलाई चाहिने सबैजसो औषधि, भिटामिन र भ्याक्सिनहरू भारतबाट आयात गरिने गरेको छ भने प्राविधिक व्यक्ति तथा भेटेरिनरी डाक्टरहरू नेपालीहरूनै रहेकाछन् । व्यवसायीहरूले आवश्यक औषधिहरू बिक्री वितरण गर्नुको साथै कृषकको माग अनुसार

फार्ममा गएर सेवा दिने समेत गरेको पाइयो । गाँउमा छरिएका साना किसानहरूले भने अनुभवी व्यक्तिहरूबाट पनि सेवा लिने गरेको पाइयो ।

**अन्य**

व्याकवार्ड लिंकेजमा महत्वपूर्ण भूमिका खेल्ने अन्य व्यवसायहरूमा अन्य कच्चामालहरू जस्तैः खोर, टहरा निर्माण गर्दा चाहिने सामाग्री, खोर टहरामा राख्ने अन्य औजार तथा भाडाकुँडा, आदि बिक्री गर्ने सप्लायर्सहरू पर्दछन । चितवन जिल्लामा करिब ५० वटा यस्ता सप्लायर्सहरू रहेका छन् । ठूलो लगानी गरी आधुनिक खोरमा कुखुरा पालेका कृषकले खोर र अन्य सामान भारतबाट एल.सि.वा डिमाण्ड ड्राफ्टको माध्यमबाट खरिद गर्ने गरेको पाइयो भने साना किसानहरूले स्थानीय रूपमा उपलब्ध सरसामान प्रयोग गर्ने गरेको पाइयो ।

त्यसैगरी अण्डा बिक्रीको लागि आवश्यक पर्ने क्रेट मा भने चितवन आत्मनिर्भर हुँदै गएको व्यवसायीहरू बताउँछन् । सानो लागानीमा र प्रयोग भइसकेका कागजलाई पुनः प्रयोग गरी निर्माण गर्न सकिने भएकोले व्यवसायीहरू आकर्षित भएको र केही ग्रुपको रूपमा विकास गरेका व्यवसायीहरूले क्रेट पनि आफै उत्पादन गर्न थालेको पाइयो । हाल चितवनमा १३ वटा क्रेट उत्पादकहरू रहेको जानकारी पाइयो ।

### ४.२.२ फरवार्ड लिंकेज

मासु तथा अण्डा उत्पादन भएपछि सप्लायर्सहरूको माध्यमबाट बजारमा बिक्रीहुने गर्छ । नेपाल कुखुरा व्यवसायी मञ्चका अनुसार चितवन जिल्लामा करिब ७० वटा मासु बिक्रेता र २५ वटा अण्डा बिक्रेता रहेका छन् ।

बिक्री वितरण तथा मूल्य निर्धारण

चितवनमा उत्पादित ब्रोइलर कुखुराको मुख्य बजार चितवन र दोस्रो ठूलो बजार काठमाडौ रहको छ । नेपाल कुखुरा व्यवसायी मञ्चको अनुसार दैनिक औसत १५,००० किलो मासु चितवनमा खपत हुन्छ भने त्यत्तिनै मात्रामा चितवन बाहिर निकासी हुनेगर्छ । चितवनमा उत्पादित अण्डाको मुख्य बजार काठमाडौ, चितवन र पोखरा रहेको छ । नेपाल कुखुरा व्यवसायी मञ्चको अनुसार दैनिक औसत ७.५० लाख -कुल उत्पादनको ७० प्रतिशत) अण्डा चितवनले निकासी गर्छ भने बाँकी ३० प्रतिशत चितवनमै खपत हुन्छ ।

व्यवसायीहरूका अनुसार मासु र अण्डाको वितरण प्रकृया छुट्टा छुट्टै रहेको छ, जसलाई निम्न बमोजिम उल्लेख गरिएको छ ।

मासु

मासु बिक्री बितरणमा सप्लायर्सको भूमिका अत्यन्तै महत्वपूर्ण रहेको पाइयो । कृषकको कुखुरा तयार भएपछि सप्लायर्सले कुखुरा खरिद गरी बजारमा बिक्रीगर्ने गरेको पाइयो । यस्ता सप्लायर्सहरू एक देखि दुई तहसम्म रहेको पाइयो (पहिलोले कृषकसँग खरिद गरी दोस्रोलाई बिक्री गर्ने र दोस्रोले बजारमा) । किसानहरूको भनाइ अनुसार मूल्य निर्धारणमा समेत सप्लायर्सकै भूमिका रहने र उनीहरूले मिलेमतोमा मूल्य निर्धारण गर्ने गर्छन् । तर, सप्लायर्सहरूसँगको छलफलमा भने उनीहरूले बजारमा रहेको माग तथा आपूर्तिको आधारमा मूल्य निर्धारण हुने गरेको जानकारी दिए । यसरी एक वा दुई चरणका सप्लायर्स पार गरेपछि कुखुरा कोल्ड स्टोरमा पुग्ने र त्यहाँबाट खरिद गरी खुद्रा बिक्रेताले उपभोक्तालाई बिक्री गर्ने गरेको पाइयो । तलको चित्रमा ब्रोइलर कुखुरा कसरी खुद्रा बिक्रेता कहाँ पुग्छ भन्ने वितरण प्रकृया देखाइएको छ ।




अण्डा

मासुको जस्तै अण्डाको बिक्री वितरणमा पनि सप्लायर्सको भूमिका महत्वपूर्ण रहेको पाइयो । कृषकले उत्पादन गरेको अण्डा सप्लायर्सले खरिद गरी डिलरलाई बिक्रीगर्ने र डिलरले साइकलवालालाई, साइकलवालाले खुद्रा बिक्रेतालाई र खुद्रा बिक्रेताले उपभोक्तालाई बिक्री गर्ने गरेको पाइयो । यस्ता सप्लायर्सहरू सामान्यतया दुई तहमा रहेको पाइयो (पहिलोले कृषकसँग खरिद गरी दोस्रोलाई बिक्री गर्ने र दोस्रोले स्थानीय डिलरलाई) । मासुमा जस्तो अण्डाको मूल्यमा धेरै परिवर्तन नआउने र अण्डाको मूल्य नेपाल अण्डा उत्पादक संघले तोके बमोजिम हुने गरेको पाइयो । तलको चित्रमा कुखुराको अण्डा कसरी खुद्रा बिक्रेता कहाँ पुग्छ भन्ने वितरण प्रकृया देखाइएको छ ।




त्यस्तै चल्ला बिक्री भने लेयर्सको हकमा सोझै कुखुरापालन गर्ने व्यवसायीलाई बिक्री गरिने तर ब्रोइलर कुखुराका चल्ला भने डिलर वा सप्लायर्स मार्फत् कृषकलाई बिक्री हुने गरेको पाइयो ।

## ४.३ कुखुरापालन व्यवसायको आर्थिक अन्तरसम्बन्ध

आ.व. २०६६/६७ मा नेपालको कुल ब्रोइलर कुखुराको संख्याको २१ प्रतिशत चितवन जिल्लामा उत्पादन भएको थियो भने यसमा १४ प्रतिशत बिन्दुले वृद्धि भई आ.व. २०६७/६८ मा ३५ प्रतिशत उत्पादन भएको पाइयो । त्यस्तै, आ.व. २०६७/६८ मा लेयर्स कुखुराको ९०.६ प्रतिशत हिस्सा चितवन जिल्लाको कुखुरापालन व्यवसायले ओगटेको पाइयो । चितवन जिल्लाको कुखुरापालन व्यवसायको वर्तमान स्थितिलाई राष्ट्रिय स्तरमा तुलना गर्दा निम्नानुसार पाइन्छ ।

**तालिका ४.५ कुखुराको कुल संख्यामा चितवनको अंश**

| | आ.व. २०६६/६७ | आ.व. २०६७/६८ |
|---|---|---|
| **ब्रोइलर माउ** | २१.० | ३५.० |
| **लेयर्स माउ** | ९८.० | ८७.० |
| **व्यावसायिक ब्रोइलर** | २१.० | ३५.० |
| **व्यावसायिक लेयर्स** | ६०.० | ९०.६ |

*स्रोत: स्थलगत अध्ययन*

आ.व. २०६६/६७ मा चितवन जिल्लाले कुल कुखुराको मासु उत्पादनको २१ प्रतिशत र अण्डा उत्पादनको ६० प्रतिशत उत्पादन गरेको थियो भने आ.व. २०६७/६८ मा यसमा वृद्धि भइ क्रमशः ३५ र ६० प्रतिशत पुगेको थियो । यसबाट, नेपालको कुल कुखुराको मासु उत्पादनमा र अण्डा उत्पादनमा चितवन जिल्लाको निकै ठूलो योगदान रहेको पुष्टि हुन्छ ।

तालिका ४.६ व्यवसायको कुल उत्पादनमा चितवनको अंश

| | आ.व. २०६६/६७ | आ.व. २०६७/६८ |
|---|---|---|
| **ब्रोइलर चल्ला** | २१ | ३५ |
| **लेयर्स चल्ला** | ९८ | ८७ |
| **कुखुराको मासु उत्पादन** | २१ | ३५ |
| **अण्डा उत्पादन** | ६० | ६० |
| **दाना उत्पादन** | २८ | २८ |

*स्रोतः स्थलगत अध्ययन*

कृषि तथा सहकारी मन्त्रालयको तथ्याङ्क अनुसार आर्थिक वर्ष २०६७/६८ मा चितवन जिल्लाको कुल मासु उत्पादनले नेपालको कुल मासु उत्पादनमा ६.४ प्रतिशत अंश ओगटेको थियो भने चितवन जिल्लाको कुखुराको मासु उत्पादनले जिल्लाको कुल मासु उत्पादनमा २७.७ प्रतिशत अंश ओगटेको थियो ।

तालिका ४.७ मासु उत्पादनमा चितवनको अंश

| **आ.व.** | कुल मासुमा कुखुराको मासुको अंश | | नेपालको कुल मासु उत्पादनमा चितवनको उत्पादनको अंश |
|---|---|---|---|
| | नेपाल | चितवन | |
| २०६५/६६ | ६.९ | २७.४ | ६.८ |
| २०६६/६७ | ७.० | २७.७ | ६.८ |
| २०६७/६८ | १३.० | २७.७ | ६.४ |
| | | | |

स्रोतः कृषि तथा सहकारी मन्त्रालय

कुखुराको मासुको औसत राष्ट्रिय मूल्य प्रति के.जी. रु.२०० र कुखुराको अण्डाको मूल्य प्रति गोटा रु. ८ रहेको देखिएकोले चितवन जिल्लाको कुखुरा-उत्पादनको बजार मूल्य रु. १२ अर्ब ९० करोड देखिन्छ । यो नेपालको कुल गार्हस्थ्य उत्पादनको १ प्रतिशत हो । चितवन जिल्लाको कुखुरा-उत्पादनको बजार मूल्य अघिल्लो वर्ष करिब रु. १० अर्ब बराबरको रहेको थियो । अध्ययनमा कुखुरापालन व्यवसायमा दाना उद्योगलाई ब्याकवार्ड लिंकेजको रूपमा लिइएकोले कुखुरा-उत्पादनमा यसको बजार मूल्य समावेश गरिएको छैन । चितवन जिल्लामा उत्पादन भएको दानाको बजार मूल्य करिब रु. ५.८० अर्ब रहेको छ । यदि दाना उद्योगलाई समेत समावेश गर्ने हो भने कुखरापालन व्यवसायका उत्पादनहरूको बजार मूल्य रु. १८.७० अर्ब, अर्थात् नेपालको कुल ग्राहस्थ्य उत्पादनको १.४ प्रतिशत हुन आउँछ ।

## ४.४ यस व्यवसायको समस्या र चुनौती

स्थलगत अध्ययनको क्रममा गरिएको अवलोकन तथा विभिन्न व्यवसायी, विज्ञ, कृषक, संघ संगठनका प्रतिनिधि र अन्य सरोकारवालाहरूसँग गरिएको छलफलका आधारमा यस व्यवसायका समस्या र चुनौतीहरूलाई निम्नानुसार औंल्याइएको छ ।

**सरकारी नीति :** यो व्यवसायमा राज्यको लगानी नरहेकोले उपेक्षित व्यवसायको रूपमा रहेको र यस व्यवसायको प्रवर्द्धनको लागि कुनै प्रकारको अध्ययन, योजना तर्जुमाका साथै कुनै किसिमको लगानीको कार्यक्रम तय नभएको ।

**प्रयोगशाला :** सरकारी प्रयोगशाला चितवनमा एउटा मात्र रहेको र त्यसको पनि पूर्ण प्रयोग हुन नसकेकोले सही ढंगले कुखुराको रोगको पहिचान र उपचार गर्न कठिनाइ हुने गरेको ।

**पोल्ट्री नीति :** कुखुरा पालन व्यवसायको सम्पूर्ण क्षेत्रलाई सम्बोधन गर्न पोल्ट्री नीति ल्याउने भनी खाका तयार भइसकेता पनि यसलाई पूर्ण रूप दिइ लागू गर्न पहल नभएको ।

**ऊर्जा संकट :** दिनानुदिन बढिरहेको लोडशेडिङ्गको कारणले हुने गरेको ऊर्जाको अभावले कुखुरापालन, ह्याचरी, दाना उत्पादन आदि सबै क्षेत्रमा नकारात्मक असर पारेको छ भने ठूला व्यवसायीले वैकल्पिक उपायबाट ऊर्जाको व्यवस्था गरेका भएतापनि त्यसले उत्पादन लागतमा उल्लेख्य वृद्धि भएको ।

**उच्च ब्याजदर :** एकातर्फ बैंक तथा वित्तीय संस्थाहरूले कुखुरापालन व्यवसायलाई उच्च जोखिम देखाई ऋण दिन अग्रसर हुँदैनन् भने अर्कोतर्फ उच्च ब्याजदरको कारणबाट ऋण लिएका व्यावसायीहरूको लागत बढ्ने गरेको ।

**बन्द हड्ताल :** राजनीतिक अस्थिरताको कारणले हुनेगरेको बन्द हड्तालले चितवन जिल्ला निकै नै प्रभावित हुने गरेको कारणले कुखुरा, चल्ला तथा अण्डा बिक्री गर्नुपर्ने बेलामा बिक्री गर्न नसकेर ठूलो क्षति व्यहोर्नु परेको ।

**न्यून बिजकीकरण :** न्यून बिजकीकरणको कारणबाट ठूला कम्पनीको रूपमा स्थापना भएका र समूहमा व्यवसाय गर्नेहरूले चाहेर पनि सही लेखा राख्न र नाफा-नोक्सान पारदर्शी बनाउन नसकेको ।

**मासु प्रशोधन केन्द्र :**ठूलो स्तरको मासु प्रशोधन केन्द्रहरू स्थापना नभएकोले कुखुराको मासुको बजार र मूल्यमा धेरै उतार चढाव आउने गरेकोले यो व्यवसाय नाफामूलक व्यवसाय भएता पनि अधिकांश समय कृषकहरूले उचित मूल्य पाउने नगरेको ।

**सहुलियत :** यस व्यवसायलाई कृषिमूलक व्यवसाय भनिने गरेता पनि यसको प्रवर्द्धनको लागि सहुलियतको व्यवस्था नभएको ।

**साथै, कृषकहरूसँग गरिएको सर्वेक्षणमा उनीहरूले औल्याएका प्रमुख समस्या यस प्रकार छन् ।**

- अण्डाको बजारमा उतार चढाव खासै नहुने भएता पनि मासुको बजारमा भने निकै उतार चढाव आउने गरेको र न्यूनतम मूल्य तोक्ने नीति नभएको कारणले बजारमूल्यमा सप्लायर्सको भूमिका अत्यन्तै महत्वपूर्ण रहेको र उनीहरूबाट समयसमयमा मिलेमतोमा कृत्रिम समस्या सृजना गरी बजार मूल्यमा समेत हेरफेर हुने गरेको ।
- बैंक तथा वित्तीय संस्थाले उच्च जोखिम देखाई ऋण नदिने गरेकोले व्यवसाय बढाउन नसकेको ।
- सहुलियत दरमा लघु कर्जाहरू उपलब्ध नभएको कारणले सप्लायर्ससँग उधारो लिइ व्यवसाय गर्नुपरेको ।
- बर्डफ्लू जस्ता संक्रामक रोग फैलदा कुखुरा नष्ट गर्दा उचित मुआब्जा नपाई ठूलो घाटा व्यहोर्नु परेको ।
- भारतबाट अबैध रूपमा चल्लाहरू चोरी पैठारी हुने गरेको ।
- आवश्यकतानुसारको श्रमिक र कामदारहरूको अभाव रहेको ।
- कृषकहरूमा चेतनाको अभाव रहेको ।

# ५ निष्कर्ष तथा सुझाव

## ५.१ निष्कर्ष

यस कार्यालयको कार्यक्षेत्रमा पर्ने चितवन जिल्लाले कुल कुखुराको मासु उत्पादनको ३५ प्रतिशत र अण्डा उत्पादनको ६० प्रतिशत हिस्सा ओगटेको तथ्याङ्कबाट यस जिल्ला कुखुरापालन व्यवसायको लागि नेपालकै प्रमुख स्थानको रूपमा परिचित भइसकेको पुष्टी हुन्छ । सानो लगानीमा घर वरपरनै कुखुरा पाल्ने साना किसानदेखि कम्पनी तथा समूह स्थापना गरी, ब्राण्डिङ्ग गरी व्यवसाय गर्ने व्यवसायीहरू समेत यस क्षेत्रमा लागेको पाइन्छ ।

मासुको लागि गरिने कुखुरापालन भन्दा अण्डाको लागि गरिने कुखुरापालनमा बढी व्यावसायिकताको विकास भएको अध्ययनको क्रममा पाइयो । ब्रोइलर कुखुरा पाल्ने साना किसानहरू सानो लगानीमा खोर निर्माण गरी औसत १००० वटा कुखुरा राखी प्रत्येक दुई महिनामा बिक्री गर्ने गर्छन् भने लेयर्स कुखुरा पाल्नेहरू आधुनिक खोर निर्माण गरी ठूलो स्तरमा कुखुरा पालन गरी औसत २५,००० अण्डा दैनिक उत्पादन गर्छन् । अण्डाको बजारमा मासुको बजारमा जति उतार चढाव नआउनु, मूल्य तुलनात्मक रूपमा स्थिर रहनु, र भण्डारण गर्न सकिने कारणले बिक्री वितरण कठिन नहुनु जस्ता कारणले ठूला व्यवसायीहरू लेयर्स कुखुरापालनतर्फ आकर्षित भएको पाइन्छ । कृषकहरूको भनाइ अनुसार ठूला स्तरका मासु प्रशोधन केन्द्रहरूको विकास भएमा मासुको बजारमा पनि समस्या नहुने र मूल्य पनि स्थिर हुन सक्छ र मासुको लागि गरिने कुखुरा पालनमा पनि व्यवसायिकता आउन सक्छ ।

यो व्यवसायमा लागेका सप्लायर्सहरूले कृषकलाई उधारोमा चल्ला र दाना प्रदान गर्ने र कुखुरा तयार भएपछि खरिद गर्ने गरेबाट त्यस्ता किसानहरू पूर्ण रूपमा सप्लायर्समा निर्भर रहेको पनि पाइन्छ । सहुलियत दरमा लघु कर्जा उपलब्ध नभएको कारणले यसरी कुखुरापालन गर्न बाध्य भएको उनीहरूको भनाइ रहेकोछ ।

यस व्यवसायमा बिस्तारै व्यवसायिकताको विकास भएता पनि दर्ता गर्ने, लेखा दुरुस्त राख्ने, कर तिर्ने जस्ता कुरामा पारदर्शीताको अत्यन्तै कमी कमजोरी रहेको पाइयो । यस सम्बन्धमा व्यवसायीहरू एकतर्फ यसलाई कृषि व्यवसाय भनिनु र अर्कोतर्फ उद्योगको रूपमा कम्पनी सरह सञ्चालन गरिनुपर्ने भएकोले यो समस्या रहेको र यसलाई कृषिजन्य उद्योग मानी कर छुट दिनुपर्ने र भन्सार सहुलियत जस्ता कुरामा सहुलियत वृद्धि गर्नुपर्ने राय राख्छन् ।

नेपालमा मासु तथा अण्डा उपभोगको स्थिति हेर्दा अन्तर्राष्ट्रिय औसतको तुलनामा निकै कम मासु तथा अण्डा उपभोग हुने गरेको देखिन्छ । संसारमा कुल उपभोग हुने मासुमा गाईको मासु (विफ) र सुंगुरको मासु (पोर्क)को अंश कुखुराको मासुको तुलनामा बढी रहने भएता पनि नेपालमा भने गाई तथा सुंगुरको मासुको उपभोग कम हुने हुँदा नेपालमा कुखुराको मासुको उपभोग संसारको औसत भन्दा बढी पुऱ्याउन सकिने देखिन्छ ।

यो व्यवसायको विकाससँगै यो व्यवसायसँग ब्याकवार्ड तथा फरवार्ड लिंकेज भएका अन्य व्यवसायहरूको पनि विकास भइरहेको तथ्य यस अध्ययनले पनि प्रष्ट पारेकोछ । यसरी पूर्ण रूपमा हेर्दा यस व्यवसायले कृषक तथा अन्य व्यवसायीहरूको आम्दानी, रोजगारी तथा जीवनस्तर सुधार गर्न ठूलो टेवा पुऱ्याइरहेको देखिन्छ भने यस क्षेत्रमा थप विकासका अवसरहरू पनि त्यत्तिनै प्रचुर मात्रामा रहेको देखिन्छ ।

## ५.३ सुझाव

यस अध्ययनका क्रममा गरिएको स्थलगत अध्ययन, अवलोकन, छलफल र सर्वेक्षणका आधारमा अध्ययनले औंल्याएका समस्या लगायतका विषयमा निम्न बमोजिम सुझाव पेश गरिएको छ ।

- स्रोत र साधन ( जनशक्ति, समय, र बजेट ) का आधारमा प्रस्तुत अध्ययन निकै सिमित रहेको छ । सरकारी स्तरबाट कुनै संयन्त्र बनाई सबै साना, मझौला तथा ठूला कृषक तथा व्यवसायीलाई समेटी विस्तृत अध्ययन

हुन सकेमा यस क्षेत्रलाई लक्षित गरी कार्यक्रम तर्जुमा गर्न सकिने र सो बाट कृषकका समस्याहरूलाई सम्बोधन गर्न सम्भव हुन्छ ।

- प्राविधिकहरू उपलब्ध भएता पनि प्रयोगशालाको अभाव रहेको समस्याको लागि पशु सेवा कार्यालय भरतपुरमा रहेको प्रयोगशालालाई सुविधा सम्पन्न गर्न सकिएमा रोगको पहिचान गर्न नसकिने हालको विद्यमान समस्या समाधान हुने देखिन्छ । सार्वजनिक निजी साझेदारीको माध्यमबाट थप प्रयोगशालाहरूको स्थापना गरेमा पनि रोग पहिचान गर्न र अन्य प्राविधिक सेवा पुऱ्याउन मद्दत पुग्ने देखिन्छ ।
- अधिकांश कृषकले सहुलियत दरमा लघुकर्जा उपलब्ध नभएको समस्या औंल्याएकोले यस सम्बन्धमा आवश्यक नीति तर्जुमा गर्नुपर्ने देखिन्छ ।
- सार्वजनिक निजी साझेदारीकै माध्यमबाट ठूलो स्तरको मासु प्रशोधन केन्द्रको स्थापना हुन सकेमा कृषकको बजार र मूल्य सम्बन्धी समस्या पनि केही हदसम्म सम्बोधन हुने देखिन्छ भने ब्रोइलर कुखुरापालनमा पनि व्यवसायिकताको विकास गर्न सकिन्छ ।
- यस क्षेत्रमा रहेको पारदर्शीताको समस्यालाई हल गर्न व्यवसाय दर्ता सम्बन्धी, कर सम्बन्धी र न्यून बिजकीकरण सम्बन्धी विषयलाई सम्बोधन गरी प्रष्ट नीति तर्जुमा हुन आवश्यक देखिन्छ ।
- तर्जुमाको क्रममा रहेको पोल्ट्री नीति यथाशिघ्र लागू गरी कृषकका समस्यालाई सम्बोधन गर्न सकिएमा यो क्षेत्रमा व्यवसायिकताको विकास भई अर्थतन्त्रमा निकै ठूलो टेवा पुग्ने देखिन्छ ।

## ख. मकवानपुर जिल्लामा दुग्ध सहकारीता: वर्तमान अवस्था र प्रर्वद्धनको सम्भावना

### १ परिचय

### १.१ पृष्ठभूमि

मकवानपुर जिल्ला मध्यमाञ्चल विकास क्षेत्र अर्न्तगत पर्ने नारायणी अञ्चलका पाँच जिल्ला मध्ये एक हो । कुल भू-भाग मध्ये ७५ प्रतिशत भू-भाग पहाडले ढाकेको यो जिल्ला समुद्री सतहदेखी १६६ मि. देखि २,५८४ मि.को उचाइमा अवस्थित छ । यस जिल्लाको कुल क्षेत्रफल २,४२६ वर्ग कि.मि.रहेको छ । केन्द्रीय तथ्याङ्क विभागको तथ्याङ्क अनुसार यस जिल्लाको कुल जनसंख्या ४,२७,४९४ रहेको छ जसमध्ये ५०.९ प्रतिशत जनता कृषि पेशामा संलग्न छन् ।

वि.सं.२०३८ सालतिर दुग्ध विकास संस्थानले मकवानपुर जिल्लाका विभिन्न स्थानमा आफ्ना दूध संकलन केन्द्रहरू स्थापना गरेबाट धेरै अघि देखिनै यस जिल्लामा दूधको लागि पशुपालन हुँदै आएको पाइन्छ । वि.स.२०४५ सालमा दुग्ध विकास संस्थानले ती संकलन केन्द्रहरूलाई कृषकहरूले नै चलाउने गरी दुग्ध उत्पादक संस्थामा परिवर्तन गरिदिएको थियो । यसपछि यी संस्थाहरू क्रमश: सहकारीको रूपमा विकसित हुँदै गएको पाइन्छ । विशेष गरी सहकारी ऐन, २०४८ लागू भएपछि यी संस्थाहरू औपचारिक रूपमा दर्ता भई सञ्चालनमा रहेको पाइन्छ ।

दुग्ध सहकारी संघको वार्षिक प्रतिवेदन, २०६८ अनुसार मकवानपुर जिल्लामा ५८ वटा दुग्ध सहकारीहरू दर्ता भएकोमा हाल ४६ वटा सहकारीहरू सञ्चालनमा रहेको र उक्त सहकारीहरूमा करिब ५,५०० किसानहरू सदस्यको रूपमा आवद्ध भएको देखिन्छ । यी सहकारी संस्थाहरूमा करिब २०० जना कर्मचारीहरू कार्यरत रहेका देखिन्छ भने यी सहकारीहरू मार्फत् दैनिक औसत १५,००० लिटर दूध संकलन एवम् बिक्री हुने गरेको पाइन्छ । कृषि मन्त्रालयको तथ्याङ्क अनुसार देशको कुल दूध उत्पादनको २ प्रतिशत मकवानपुर जिल्लामा उत्पादन हुने गरेको छ (A Year Book 2010, MOAC) । यी तथ्यबाट दुग्ध सहकारीहरू यस जिल्लाका कृषकहरूका लागि भरपर्दो सहयोगी मात्र नभई प्रत्यक्ष अप्रत्यक्ष रोजगारी तथा आय आर्जनको स्रोत बनिरहेको प्रष्ट हुन्छ ।

### १.२ अध्ययनको उद्देश्य

यो अध्ययन मकवानपुर जिल्लाको दुग्ध सहकारीताको विस्तृत अध्ययन भएकोले यसका उद्देश्यहरू निम्नानुसार रहेका छन् ।

क) मकवानपुर जिल्लाको दुग्ध सहकारीताको वर्तमान अवस्थाको चित्रण गर्ने ।

ख) मकवानपुर जिल्लामा दुग्ध व्यवसायको विकासका लागि दुग्ध सहकारीताले खेलेको भूमिकाको अध्ययन गर्ने ।

ग) मकवानपुर जिल्लामा दुग्ध सहकारीताको प्रवर्द्धनका सम्भावनाहरू पहिचान गर्ने ।

### १.३ अध्ययनको औचित्य

मकवानपुर जिल्लामा दुग्ध सहकारीताको माध्यमबाट गाई माई बीमा, नश्ल सुधार, उन्नत घाँस उत्पादन, गोठ सुधार जस्ता कार्यक्रमहरू सञ्चालन भइरहेको र यसबाट कृषकहरू व्यवसायिक पशुपालनतर्फ आकर्षित भएको देखिन्छ । भौगोलिक दृष्टिकोणबाट पनि भित्री तराईदेखी उच्च पहाडसम्म फैलिएको यो भू–भागमा पशुपालनको लागि आवश्यक पर्ने पूर्वाधार जस्तै: घाँस, चरन, आदिको प्रचुर सम्भावना रहेकोले यस क्षेत्रमा आधुनिक पशुपालनको विकास गर्न सकिने सम्भावना पनि त्यत्तिकै रहेको देखिन्छ । सहकारीताको विकाससँगै विकास हुँदै गएको पशुपालन व्यवसायको वर्तमान अवस्था कस्तो छ ? यसले मकवानपुर जिल्लाका कृषकहरूको पेशा,

आम्दानी तथा रोजगारीमा के कस्तो प्रभाव पारेको छ ? यो व्यवसायको प्रवर्द्धनका सम्भावना के कस्ता छन् ? यसको समस्या र चुनौती के हुन ? भन्ने जस्ता विषयको जानकारी सरकारको आर्थिक सल्लाहकारको रूपमा रहेको यस संस्थाले राख्न आवश्यक भएकोले यस विशेष अध्ययनलाई वार्षिक कार्ययोजनामा राखिएको हो ।

### १.४ अध्ययनका सीमाहरू

प्रस्तावित अध्ययन नेपालको समग्र पशुपालन एवम् दुग्ध सहकारीताको बारेमा नभई मकवानपुर जिल्लाको दुग्ध सहकारीतामा मात्र सिमित रहेको छ । कृषकहरूले आफ्नो उत्पादन एवम् कुल आम्दानी र खर्चको यथार्थ विवरण राख्ने गरेको नपाइएकोले दुग्ध सहकारी तथा कृषकहरूबाट उपलब्ध हुने सिमित तथ्याङ्क, छलफल तथा सर्वेक्षणमा मात्र यो अध्ययन सिमित रहेको छ । त्यस्तै, सिमित स्रोत (बजेट, जनशक्ति र अध्ययन अवधि)को करणले यो अध्ययन छनौट गरिएका सिमित नमूनामा मात्र आधारित छ ।

## ३ अनुसन्धान विधि

### ३.१ तथ्याङ्कको स्रोत

यस अध्ययनको लागि आवश्यक तथ्याङ्क प्राथमिक तथा द्वितीय दुवै स्रोतबाट संकलन गरिएको छ । प्राथमिक तथ्याङ्कको लागि स्थलगत भ्रमण, अवलोकनका साथै कृषक, सहकारीका पदाधिकारी तथा प्रतिनिधिहरूसँग अन्तर्वार्ता, छलफल, प्रश्नावली सर्वेक्षण आदि गरिएको छ भने द्वितीय तथ्याङ्कको लागि जिल्ला विकास कार्यालय, जिल्ला पशु सेवा कार्यालय, डिभिजन सहकारी कार्यालय, दुग्ध सहकारी संघ र दुग्ध सहकारीहरूका वार्षिक प्रतिवेदन तथा अन्य सूचनामुलक प्रकाशनहरूका साथै इण्टरनेटमा उपलब्ध सन्दर्भ सामाग्रीहरूको प्रयोग गरिएको छ ।

### ३.२ तथ्याङ्क संकलन विधि

यो अध्ययन मुलतः प्राथमिक तथ्याङ्कमा आधारित छ । यसको लागि निम्नानुसार तथ्याङ्क संकलन गरिएको छ ।

क) सञ्चालनमा रहेका कुल ४६ वटा सहकारीहरू मध्ये Judgement Sampling का आधारमा १० वटा (करिब २१ प्रतिशत) सहकारीका व्यवस्थापकहरूसँग छलफल तथा प्रश्नावली सर्वेक्षण गरियो ।

Judgemental Samplingगर्दा सहकारीका विभिन्न विशेषताहरू जस्तै महिलाद्वारा मात्र सञ्चालित, धेरै किसानहरू समेटेको, धेरै शेयर सदस्य भएको, सदरमुकामबाट सबैभन्दा नजिक पर्ने, सदरमुकामबाट टाढा पर्ने, गाई-माई बीमा सञ्चालन भएको, सबैभन्दा राम्रो व्यवस्थापन भएको, भैसीपालन बढी भएको, गाईपालन बढी भएको र सबैभन्दा बढी मूल्य पर्ने दूध उत्पादन गर्ने आदीको आधारमा छनौट गरियो ।

ख) Judgement Sampling का आधारमा छनौट गरिएका १० वटा सहकारीमा आबद्ध कृषकहरू मध्ये प्रत्येक सहकारीबाट ६ जनाको दरले जम्मा ६० जना दुग्ध उत्पादक कृषकहरूसँग छलफल तथा प्रश्नावली सर्वेक्षण गरियो । छनौट गरिएका सहकारीहरू निम्नानुसार प्रस्तुत गरिएको छ ।

तालिका ३.१ छनौट गरिएका सहकारीहरू

| क. सं | सहकारीको नाम | छनौटका आधारहरू |
|---|---|---|
| १ | किसान दुग्ध उत्पादक सहकारी संस्था | सदरमुकामबाट नजिक पर्ने |
| २ | चेतनशील दुग्ध उत्पादक सहकारी संस्था | बढी कृषकलाई समेटेको |
| ३ | सुपिङ दुग्ध उत्पादक सहकारी संस्था | दुर्गममा रहेको |
| ४ | सृजनशील दुग्ध उत्पादक सहकारी संस्था | गाई माई बीमा भएको र महिला द्वारा सञ्चालित |
| ५ | वनदेवी दुग्ध उत्पादक सहकारी संस्था | गाई पालन बढी भएको |
| ६ | जनजागृति नगर दुग्ध उत्पादक सहकारी संस्था | भैसी पालन बढी भएको |
| ७ | पशुपतिनगर दुग्ध उत्पादक सहकारी संस्था | सदरमुकामबाट नजिक पर्ने |
| ८ | लक्ष्मी नारायण दुग्ध उत्पादक सहकारी संस्था | राम्रो व्यवस्थापन भएको |
| ९ | वंश गोपाल दुग्ध उत्पादक सहकारी संस्था | गाई पालन बढी भएको |
| १० | नारायणी दुग्ध उत्पादक सहकारी संस्था | धेरै शेयर सदस्य रहेको |

### ३.३ विश्लेषण विधि

यस अध्ययनको तथ्याङ्क विश्लेषण गर्दा प्रश्नावली सर्वेक्षणबाट प्राप्त तथ्याङ्क/जानकारीहरूलाई तालिकीकरण गरिएको छ । दुग्ध सहकारीको वर्तमान अवस्थाको चित्रण गर्नको लागि कृषक तथा दुग्ध सहकारीबाट प्राप्त तथ्याङ्कलाई सामान्य तथ्याङ्कीय विश्लेषण गरी तालिका एवम् सामान्य चित्रहरूमा प्रस्तुत गरिएको छ भने दुग्ध व्यवसाय विकासको लागि सहकारीले खेलेको भूमिकाको अध्ययन गर्न प्रश्नावली सर्वेक्षणबाट प्राप्त जानकारीहरूलाई तालिकाहरूको सहायताले प्रस्तुत गरिएको छ । त्यस्तै, दुग्ध सहकारीताको प्रवर्द्धनको सम्भावनाको विश्लेषण गर्न प्रश्नावली सर्वेक्षण, अवलोकन, छलफल र अन्तरक्रियाबाट प्राप्त जानकारीहरूलाई संक्षेपीकरण गरी प्रस्तुत गरिएको छ ।

## ४ तथ्याङ्क प्रस्तुतीकरण तथा विश्लेषण

### ४.१ मकवानपुर जिल्लाको दुग्ध सहकारीताको वर्तमान अवस्था

#### ४.१.१ सहकारीको संख्यात्मक अवस्था

आ.व.२०६७/०६८ सम्ममा जिल्ला सहकारी डिभिजन मकवानपुरमा सबै प्रकृतिका गरी कुल ४४० सहकारीहरू दर्ता भएकोमा ६० वटा दुग्ध सहकारी दर्ता भएको देखिन्छ । जसमध्ये ४६ वटा सहकारीहरू अहिले सञ्चालनमा छन् । मकवानपुर जिल्लामा उद्देश्य अनुसारका सहकारी संघ संस्थाहरूको स्थिति तालिका नं. ४.१.१ मा देखाइएको छ ।

तालिका ४.१. मकवानपुर जिल्लामा उद्देश्य अनुसारका सहकारी संस्थाहरू

| क.स. | सहकारीहरू | संख्या | प्रतिशत | सदस्य | |
|---|---|---|---|---|---|
| | | | | **महिला** | **पुरुष** |
| १ | वचत | १९३ | ४३.९ | ३०,३२९ | १४,११२ |
| २ | कृषि | ७५ | १७ | २,७८८ | २,९३० |
| ३ | बहुउद्देश्यीय | ६७ | १५.२ | ३,०३१ | ११,०५३ |
| ४ | दुग्ध | ६०* | १३.६ | १,०१५ | ४,३८९ |
| ५ | उपभोक्ता | २३ | ५.२ | २५८ | ३९८ |
| ६ | जडिबुटी | ८ | १.८ | ६८ | १७६ |
| ७ | विविध | १४ | ३.२ | ५७८ | ५२५ |
| | **जम्मा** | ४४० | १०० | ३८,०६७ | ३३,५८३ |

*२ वटा सहकारीको दर्ता खारेज भएको

*स्रोत : डिभिजन सहकारी कार्यालय, मकवानपुर*

तथ्याङ्क अनुसार मकवानपुर जिल्लामा सबैभन्दा धेरै ४३.९ प्रतिशत सहकारीहरू वचत तथा ऋण सहकारीहरू रहेको देखिन्छ भने सबैभन्दा कम १.८ प्रतिशत जडिबुटीसँग सम्बन्धित सहकारीहरू रहेको देखिन्छ । त्यस्तै १४ प्रतिशत (६० वटा) सहकारीहरू दुग्ध व्यवसायसँग सम्बन्धित रहेकोमा २ वटाको दर्ता खारेजी भएको तथा १२ वटा सहकारीहरू हाल सञ्चालनमा नरहेको भन्ने जानकारी जिल्ला दुग्ध सहकारी संघबाट प्राप्त भए अनुसार हाल केबल ४६ वटा दुग्ध सहकारीहरू मात्र सञ्चालनमा रहेको देखिन्छ । यस तथ्याङ्कको आधारमा मकवानपुर जिल्लामा दुग्ध सहकारीहरूको उल्लेख्य उपस्थिति देखिन्छ ।

### ४.१.२ लाभान्वित कृषकहरू

जिल्ला दुग्ध उत्पादक सहकारी संघको वार्षिक प्रतिवेदन २०६८ अनुसार कुल ५,५०० कृषकहरू शेयर सदस्यको रूपमा सहकारीहरूबाट लाभान्वित भइरहेका देखिन्छन् भने अन्य केही कृषकहरूले गैर शेयर सदस्यको रूपमा पनि लाभ लिइरहेका छन् । सञ्चालनमा रहेका ४६ वटा दुग्ध सहकारीहरू मध्ये यस अध्ययनको लागि छानिएका १० वटा सहकारीहरूमा २,६९२ जना शेयर सदस्य र ४७७ जना गैर शेयर सदस्य गरी जम्मा ३,१६९ जना कृषकहरूले सहकारीबाट सेवा लिएको पाइयो । छनौट गरिएका सहकारीहरूमा शेयर सदस्य संख्या न्यूनतम ३५ देखि अधिकतम ४५७ सम्म रहेको पाइयो भने न्यूनतम १५० देखि अधिकतम ६५० जना कृषकलाई सेवा दिएको पाइयो । औसतमा शेयर सदस्य तथा गैर शेयर सदस्य गरी प्रति सहकारी ३२ जना कृषकहरू लाभान्वित भएको देखिन्छ ।

### ४.१.३ पशुपालनको स्थिति

छनौट गरिएका कृषकहरूसँग गरिएको प्रश्नावली सर्वेक्षण अनुसार ५० प्रतिशतले परम्परागत रूपमा पशुपालन गरी दूध उत्पादन गरेको पाइयो भने बाँकी ५० प्रतिशतले व्यवसायिक रूपमा पशुपालन गरेको पाइयो । सर्वेक्षण अनुसार ६० प्रतिशत किसानहरूले गाईमात्र, १२ प्रतिशतले भैसी मात्र र बाँकी २८ प्रतिशतले दुवै पालेको देखिन्छ । दूध उत्पादक कृषकहरूले १ देखि बढीमा ७ वटासम्म पशुपालन गरेको देखिन्छ । जसमध्ये ४८ जना कृषकले उन्नत जातको र बाँकी १२ जनाले स्थानीय जातको पशुपालन गरेको देखिन्छ । यसरी हेर्दा कृषकहरू उन्नत जातका गाई पालनतर्फ आकर्षित भएको देखिन्छ । यस सम्बन्धी तथ्याङ्क तालिका ४.१.३ मा देखाइएको छ ।

तालिका ४.२ पशुपालनको स्थिति

| क्र.स. | विवरण | परम्परागत | | व्यवसायिक | | जम्मा |
|---|---|---|---|---|---|---|
| | कृषकको संख्या | स्थानीय जात | उन्नत जात | स्थानीय जात | उन्नत जात | |
| १ | गाई पाल्ने कृषक | ४ | २ | ० | ३० | ३६ |
| २ | भैसी पाल्ने कृषक | ७ | ० | ० | ० | ७ |
| ३ | गाई/भैसी दुवै पाल्ने | १० | ७ | ० | ० | १७ |
| | जम्मा कृषक संख्या | २१ | ९ | ० | ३० | ६० |

*स्रोत : स्थलगत सर्वेक्षण २०६८*

### ४.१.४ उत्पादन

जिल्ला दुग्ध उत्पादक सहकारी संघ मकवानपुरले उपलब्ध गराएको तथ्याङ्क अनुसार मकवानपुर जिल्लामा प्रति सहकारी न्यूनतम वार्षिक ६,५७० लिटर देखि अधिकतम ५,६०,७४९ लिटरसम्म दूध संकलन हुने र जिल्लामा सहकारीमार्फत् वार्षिक ५१,०८,३२५ लि. दूध उत्पादन हुने गरेको देखिन्छ । उक्त दूध एकद्वार नीति अनुरूप जिल्ला सहकारी संघ मार्फत् बिक्री हुने गरेको देखिन्छ । जिल्ला सहकारी संघले उपलब्ध गराएको जानकारी अनुसार उक्त उत्पादन बजार मागको तुलनामा कम हो ।

### ४.१.५ मूल्य तथा बजार व्यवस्थापन

सरकारद्वारा निर्धारित दूधको मूल्य SNF ( Solid but Not Fat) र Fat का आधारमा प्रति लिटर रु. ३० देखि रु. ५२ सम्म कृषकले पाउने गरेको पाइयो । मूल्य निर्धारण प्रति Fat रु. ३.५२ तथा प्रति SNF रु. २ का दरले दूधको मूल्य निर्धारण हुने गरेको पाइयो । भैसीको दूधमा बढी Fat हुने भएकोले गाई पालन गर्ने किसानले भन्दा भैसीपालन गर्ने किसानले बढी मूल्य पाएको देखियो । सर्वेक्षण अनुसार भैसीको दूधको मूल्य धेरै पाउने भएतापनि भैसी पालनमा भन्दा गाई पालनमा लागत कम पर्ने, गाईबाट धेरै दूध उत्पादन हुने, दूध उत्पादन लामो समयसम्म प्राप्त गर्न सकिने, गाईका बाच्छीहरूले कम उमेरमै गर्भाधारण गर्न सक्ने, उन्नत जातको भैसी पाउन कठिनाइ रहेको जस्ता कारणले व्यवसायिक भैसीपालन भन्दा गाईपालनतर्फ कृषकहरू आकर्षित भएको पाइयो ।

दूधको मूल्य निर्धारण सम्बन्धमा सहकारीका व्यवस्थापकहरूमा गरिएको सर्वेक्षणमा ४० प्रतिशतले सरकारले, ४० प्रतिशतले सहकारी एवम् सरकार मिलेर र बाँकी २० प्रतिशतले व्यवसायी संघले मूल्य निर्धारण गर्न उपयुक्त हुने धारणा व्यक्त गरे । त्यस्तै ७२ प्रतिशत कृषकले मूल्य सरकारले समयसापेक्ष रूपमा निर्धारण गर्नु उपयुक्त हुन्छ भनी प्रतिक्रिया दिए भने २८ प्रतिशतले सहकारी र सरकार मिलेर मूल्य तोक्नु पर्दछ भन्ने प्रतिक्रिया दिए ।

मकवानपुर जिल्लामा दुग्ध सहकारीबाट संकलित दूधको बजार व्यवस्थापन एकद्वार प्रणालीबाट भएको देखिन्छ । उत्पादित दूध, दुग्धउत्पादक कृषकबाट प्राथमिक सहकारी, चिस्यान केन्द्र, सहकारी संघ, डेरी उद्योग हुँदै अन्तिम उपभोक्तासम्म पुग्ने व्यवस्था मिलाइएको पाइयो । चिस्यान केन्द्रमा जम्मा भएको दूध कुन डेरी उद्योगलाई बिक्री गर्ने भन्ने निर्णय जिल्ला सहकारी संघले गर्ने र सोही अनुसार डेरी उद्योगको सवारी साधन चिस्यान केन्द्रसम्म दूध संकलन गर्न जाने गरेको पाइयो । विगतमा जस्तो "*दूध बिदा*"*(Milk Holiday)*को समस्या आउन नदिन दुग्ध विकास संस्थानका अतिरिक्त अन्य निजी दुग्ध प्रशोधन उद्योगहरूलाई समेत दूध बिक्री गर्ने व्यवस्था मिलाउन यसो गरिएको सहकारी संघबाट जानकारी पाइयो ।

सर्वेक्षण गरिएका कृषकहरूमध्ये ५८ जनाले प्राथमिक सहकारीमा मात्र र २ जनाले सहकारी मार्फत् एवम् स्वयं बजारमा पनि दूध बिक्री गर्ने गरेको पाइयो। छलफलको क्रममा दूध सिधै बजारमा बिक्री गर्दा मूल्य राम्रो पाउने गरेको पाइयो । तर, नियमित मागको अभावले कतिपय अवस्थामा दूध सिधै बजारमा बिक्री नहुने भएकाले अधिकांश कृषकहरूले सहकारी मार्फत् नै दूध बिक्री गर्ने गरेको पाइयो । दूध बिक्री प्रक्रियालाई निम्न चित्रमा प्रस्तुत गरिएको छ ।




*स्रोत : जिल्ला दुग्ध उत्पादक सहकारी संघ मकवानपुर ।*

### ४.२ मकवानपुर जिल्लाको दुग्ध व्यवसायमा सहकारीको भूमिका

दुग्ध सहकारीताको विकास पुर्व कृषकहरूले दूध संकलन केन्द्र मार्फत् दूध बिक्री गर्ने गरेको देखिन्छ । दुग्ध सहकारीको विकास पछि दूधको बजार व्यवस्थापन सहकारी मार्फत् हुन थालेको र यसबाट दूधको बजार व्यवस्थापन सहज हुनुको साथै यी सहकारीहरूले पशुपालनका लागि आवश्यक विभिन्न सेवाहरूको विस्तार गर्दै कृषकहरूको आय तथा रोजगारीमा महत्वपूर्ण भूमिका खेलिरहेको देखिन्छ।

### ४.२.१ सहकारीले प्रदान गर्ने सेवा

मकवानपुर जिल्लामा दुग्ध उत्पादक किसानहरूले दुग्ध सहकारी मार्फत् विभिन्न सेवाहरू प्राप्त गरिरहेको देखिन्छ । सहकारीहरूले उत्पादित दूध खरिददेखि दाना चोकर व्यवस्थापन, कृत्रिम गर्भाधान, परामर्श सेवा, अवलोकन भम्रण, ऋण सुविधा, पशु बीमा, उन्नत जातका पशु खरिदमा सहयोग, प्राविधिक सहयोग तथा अन्य समन्वयात्मक सहयोग उपलब्ध गराएको देखिन्छ । सर्वेक्षण अनुसार ४५ प्रतिशत कृषकहरूले सहकारीको प्रोत्साहनको कारणले पशुपालन व्यवसाय सुरु गरेको पाइयो । यस्तैगरी सहकारीका व्यवस्थापकहरूमा गरिएको सर्वेक्षण अनुसार, शत प्रतिशत व्यवस्थापकहरूले दुग्ध सहकारी मार्फत् कृषकहरूलाई पशुपालनका लागि प्रोत्साहन स्वरूप विभिन्न कार्यक्रमहरू लागू गरिएको र यसले कृषिको लागि पुरकको काम गरेकोले कृषि उत्पादकत्व, आय, रोजगारी आदिमा सकारात्मक भूमिका खेलेको कुरा औंल्याए। सर्वेक्षण अनुसार जिल्लाका दुग्ध सहकारीबाट दुग्ध उत्पादक किसानहरूले प्राप्त गरेको सेवाहरूलाई निम्न अनुसार देखाइएको छ।

तालिका ४.३ दुग्ध सहकारीबाट दुग्ध उत्पादक किसानहरूले प्राप्त गर्ने सेवाहरू

| क्र.स | कृषकले प्राप्त गर्ने सेवाको किसिम | कृषकको संख्या | प्रतिशत |
|---|---|---|---|
| १ | दूध खरिद | ६० | १०० |
| २ | ऋण सहयोग | ४५ | ७५ |
| ३ | परामर्श सेवा | ३० | ५० |
| ४ | दाना चोकर | २० | ३३ |
| ५ | पशु बीमा | १८ | ३० |
| ६ | पशु औषधि | १३ | २२ |

*स्रोत : स्थलगत सर्वेक्षण, २०६८*

सर्वेक्षण अनुसार कृषकहरूले सहकारीबाट विभिन्न प्रकारका सेवाहरू लिने गरेको पाइयो । जसमध्ये सबै कृषकले दूध खरिदको सेवा उपभोग गरिरहेको पाइयो। यसैगरी ऋण सहयोग, परामर्श सेवा, पशु औषधि, पशु बीमा, दाना

र चोकरको सुविधा लिने कृषकहरू क्रमशः ७५, ५०, २२, ३० र ३३ प्रतिशत रहेको पाइयो । सहकारीका उक्त सेवाहरू प्रति अधिकांश कृषकहरू सन्तुष्ट रहेको पाइयो ।

### ४.२.२ रोजगारी तथा आय

सर्वेक्षण अनुसार सहकारीहरूमा दुग्ध व्यवस्थापन तथा सहकारीको नियमित कार्यको लागि प्रत्येक सहकारीमा २ जनादेखि बढीमा ६ जनासम्म कर्मचारी कार्यरत रहेको पाइयो । कर्मचारीको रूपमा नियुक्त हुनको लागि दूध उत्पादक किसान नै हुनु पर्ने अनिवार्यता रहेको स्थलगत अध्ययनको क्रममा जानकारी पाइयो । कृषकले पशुपालनलाई खेतिपातिको परिपुरकको रूपमा लिएकोले यस व्यवसायमा परिवारका सदस्यहरूको आंशिक संग्लनता रहने गरेको सर्वेक्षणमा देखिन्छ । कृषकहरूमा गरिएको सर्वेक्षण अनुसार १२ जना (२० प्रतिशत )को घरमा ३ जनाले रोजगारी पाएका, २८ जना (४७ प्रतिशत )को घरमा २ जनाले रोजगारी पाएको र २० जना (३३ प्रतिशत )को घरमा १ जनाले रोजगारी पाएको पाइयो ।

यस व्यवसायबाट कृषकहरूको आम्दानीमा कस्तो प्रभाव परेको छ भनी गरिएको सर्वेक्षण अनुसार ९५ प्रतिशतले व्यवसाय गर्नुअघि भन्दा अहिलेको आम्दानी राम्रो रहेको देखाए, २ प्रतिशतले आम्दानीमा अति राम्रो परिवर्तन रहेको देखाए भने बाँकी ३ प्रतिशतले आम्दानीमा खासै परिर्वतन नभएको जानकारी दिए ।

### ४.२.३ गोठ तथा घाँस व्यवस्थापन

स्थलगत अध्ययनको क्रममा जिल्ला दुग्ध सहकारी संघ मकवानपुरका पदाधिकारी तथा दुग्ध उत्पादक कृषकहरूसँग गरिएको छलफलबाट जिल्लामा जिल्ला कृषि कार्यालयको आर्थिक एवम् प्राविधिक सहयोगमा दुग्ध सहकारीहरू मार्फत् सञ्चालित गोठ सुधार कार्यक्रमबाट कृषकहरू लाभान्वित भएको पाइयो । परम्परागत तथा अव्यवस्थित गोठहरूलाई स्वस्थ एवम् व्यवस्थित बनाउन यस कार्यक्रमले कृषकहरूलाई सहयोग पुगेको देखिन्छ । त्यसैगरी जिल्ला कृषि कार्यालयकै आर्थिक तथा प्राविधिक सहयोगमा जिल्ला दुग्ध उत्पादक सहकारी संघ मार्फत् उन्नत जातका घाँस विकास कार्यक्रमबाट कृषकहरू लाभान्वित छन् । विभिन्न गैर सरकारी संस्था मार्फत् प्राप्त हुने आर्थिक एवम् प्राविधिक सहयोग पनि कृषकहरूलाई प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा उपलब्ध गराउन सहकारीहरूले महत्वपूर्ण भूमिका खेलेको पाइयो ।

### ४.२.४ अन्य

दुग्ध सहकारीले दूध उत्पादन वृद्धि गर्न तथा पशुपालनमा व्यावसायिकता ल्याउने उद्देश्यले कृषक उत्प्रेरणाको लागि अधिकांश सहकारीहरूमा विभिन्न पुरस्कारका र्कायक्रमहरू लागू गरिएको पाइयो । जसमा प्रतिदिन २० लिटर भन्दा बढी दूध नियमित बिक्री गर्ने किसानहरूलाई T.S.(Total Solid) कमिशन स्वरूप सहकारीलाई प्राप्त हुने रकम मध्ये उक्त किसानले बेचेको दूधको आधारमा २१ प्रतिशत देखि ३० प्रतिशतसम्म किसानलाई नै फिर्ता गर्ने गरेको देखियो । त्यसैगरी केही सहकारीहरूले ऋण लगानी गर्दा व्यवसायिक रूपमा दूध उत्पादन प्रयोजनको लागि ५ वटा वा सो भन्दा बढी सङ्ख्यामा पशुपालन गर्ने किसानहरूको लागि ऋण भुक्तानी समय सीमामा एक वर्ष थप दिने र ऋणमा लगाइने ब्याजदरमा पनि अन्य किसानहरूलाई लगाइने ब्याजदर भन्दा १ प्रतिशत कम गर्ने व्यवस्था गरेको पाइयो । उत्कृष्ट किसानहरूलाई जिल्ला सहकारी संघले व्यवसाय प्रवर्द्धनको लागि विभिन्न स्थानहरूमा नियमित रूपमा निशुल्क अवलोकन गराउने व्यवस्था गरेको पाइयो । त्यस्तैगरी जिल्ला पशुसेवा कार्यालयसँग समन्वय गरी व्यवसायिक पशुपालनको लागि नश्ल सुधार कार्यक्रम अन्तरगत उन्नत जातका साँढेहरू ल्याई स्थानीय जातमा क्रस गर्ने र उन्नत जातको पशुको बीज (Semen) ल्याई कृत्रिम गर्भधारण गराई किसानहरूलाई व्यवसायिक पशुपालनतर्फ लैजान उत्प्रेरित गर्ने कार्यमा दुग्ध सहकारी तथा जिल्ला दुग्ध उत्पादक संघले राम्रो भूमिका खेल्ने गरेको पाइयो । यसरी क्रस गराउनको लागि आवश्यक पर्ने Semen नेपालको पोखराबाट आउने गरेको र निकट भविष्यमा नै चितवन जिल्लामा यसको सुविधा उपलब्ध हुन सक्ने सम्भावना

रहेको कृषकहरू तथा सहकारीका पदाधिकारीहरूसँगको छलफलमा जानकारी प्राप्त भयो । जिल्ला पशु कार्यालय मकवानपुरले दिएको जानकारी अनुसार स्थानीय जातमा क्रस गराउदा नि:शुल्क गराउनुको साथै एक पशुमा क्रस गराउने कृषकलाई पशुको औषधिको लागि रु. १०० अनुदान दिने गरेको छ भने उन्नत जातमा नै क्रस गराउने कृषकहरूलाई न्यूनतम शुल्क लिने गरेको देखिन्छ ।

अधिकांश दुग्ध सहकारीहरूमा पशुबीमाको अभाव देखियो । सर्वेक्षण गरिएको १० वटा सहकारी मध्ये २ वटा सहकारीमा मात्र पशुबीमा कार्यक्रम लागू गरिएको देखियो । जसमध्ये एउटामा गाई माई (पशु तथा पशु धनी) दुवैको र अर्को एकमा पशुको मात्र बीमा रहेको पाइयो । जिल्ला सहकारी संघ मकवानपुरले जनाए अनुसार कुल ४६ वटा सञ्चालनमा रहेका सहकारीहरू मध्ये ५ वटा सहकारीमा मात्र पशुबीमा कार्यक्रम सञ्चालनमा रहेको, जसमध्ये महिलाद्वारा मात्र सञ्चालित २ वटा दुग्ध सहकारीमा भने गाई माई दुवैको बीमा रहेको पाइयो । सर्वेक्षणमा १८ जना कृषकहरूले पशुबीमा गराएको जसमा ५ जना अर्थात् ८ प्रतिशत कृषकहरू गाई माई दुवैको बीमा गर्नेमा पर्दछन् भने बाँकी ७० प्रतिशत किसानहरूले भने पशुबीमा हुन नसकेको जनाए ।

### ४.३ मकवानपुर जिल्लाको दुग्ध सहकारीताको प्रवर्द्धनका सम्भावनाहरू

भौगोलिक दृष्टिकोणबाट भित्रि तराईदेखी उच्च पहाडसम्म फैलिएको मकवानपुर जिल्लामा पशुपालनको लागि आवश्यक पूर्वाधार, घाँस, चरन आदिको प्रचुर सम्भावना देखिन्छ । सहकारीका व्यवस्थापकहरूमा गरिएको सर्वेक्षण अनुसार ८० प्रतिशत व्यवस्थापकहरूले आफ्नो कार्यक्षेत्र तथा शेयर सदस्यहरूको विस्तार गर्न सक्ने सम्भावना प्रचुर रहेको बताए । यसको लागि नश्ल सुधार, पशुधन सुरक्षा, घाँस विकास जस्ता कार्यक्रमहरूलाई सहकारीको आगामी योजनामा उच्च प्राथामिकतामा राखेको जनाए । तल उल्लिखित आधारहरूले पनि मकवानपुर जिल्लामा दुग्ध सहकारीताको प्रवर्द्धनको सम्भावनालाई थप प्रष्ट पार्दछन् ।

#### ४.३.१ भौगोलिक आधार

पशुपालनको लागि मकवानपुर जिल्ला विभिन्न दृष्टिकोणबाट उपयुक्त देखिन्छ । जिल्ला पशु सेवा कार्यालयको वार्षिक प्रतिवेदन, ०६६/६७ अनुसार मकवानपुर जिल्ला हावापानीको दृष्टिकोणबाट हेर्दा पोखरा पछि बढी वर्षा हुने जिल्ला हो । यो जिल्लामा वार्षिक सरदर २,५३५ मि. लि. लिटर वर्षा हुने तथा सरदर १६.६ डिग्री सेन्टिग्रेड देखी ३०.३ डिग्री सेन्टिग्रेडसम्म तापक्रम पाइन्छ । त्यसैगरी भू उपभोग तर्फ २५.१५ प्रतिशत भूमि कृषियोग्य रहेको, ५९.१४ प्रतिशत वनक्षेत्र रहेको, २.०३ प्रतिशत घाँसे मैदान रहेकोले पनि यो क्षेत्र पशुपालनको लागि उपयुक्त मान्न सकिन्छ । सोही कार्यालयको कवुलियत वन तथा पशु विकास कार्यक्रमको वार्षिक प्रतिवेदन, ०६६ र ०६७ अनुसार मकवानपुर जिल्लाका कुल ४०८ कृषक समूहहरूलाई करिब २,००० हेक्टर कवुलियत वन क्षेत्र घाँस विकास लगायतका कार्यक्रमका लागि हस्तान्तरण गरेको देखिन्छ र यसबाट १,२२१ पशुपालन गर्ने कृषकहरूको परिवार प्रत्यक्ष रूपमा लाभान्वित भएको देखिन्छ ।

#### ४.३.२ बजार माग

सहकारीका व्यवस्थापकमा गरिएको सर्वेक्षणमा ९० प्रतिशत व्यवस्थापकहरूले माग अनुसारको आपूर्ति गर्न नसकेको जनाए भने बाँकी १० प्रतिशतले भने माग र आपूर्ति करिब बराबर रहेको जनाए । यस जिल्लाको प्रमुख दूध खपतकर्ताको रूपमा हेटौडा डेरी र दुग्ध विकास संस्थान, हेटौडा पर्दछन ।

#### ४.३.३ अन्य

जिल्ला सहकारी संघ मकवानपुरले जनाए अनुसार मकवानपुर जिल्लामा विभिन्न गैर सरकारी संस्थाहरूले गाई-माई बीमा, उन्नत घाँस व्यवस्थापनमा सहयोग, कृषि तालिम तथा अन्य आर्थिक तथा प्राविधिक सहयोग प्रदान गरिरहेका छन् । स्थलगत अध्ययनको क्रममा युवा पुस्ता समेत व्यावसायिक पशुपालनतर्फ आकर्षित भएको पाइयो । विदेशमा गई सीप सिकेका एवम् स्वदेशमा बेरोजगार रहेका केही युवाहरू व्यावसायिक गाईपालनतर्फ

आकर्षित हुनुले पनि मकवानपुर जिल्लामा यस व्यवसायको प्रवर्द्धनको राम्रो सम्भावना देखिन्छ । त्यस्तैगरी दुग्ध सहकारीहरूले दूध व्यवसायको अतिरिक्त वचत तथा ऋण सुविधा, दाना औषधि, चोकर, मल खाद बिक्री आदि कार्यक्रम समेत चलाउन थालेको पाइयो । यसबाट सहकारीहरू थप नाफा आर्जन गर्न सक्षम भई व्यावसायिक पशुपालनका लागि कृषकहरू समक्ष विभिन्न कार्यक्रमहरू लानको लागि कोशिस गरिरहेको देखियो । सेयर सदस्य तथा दूध उत्पादन वृद्धिको लागि विभिन्न योजनाहरू निर्माण तथा कार्यान्वयन हुनुले पनि जिल्लामा पशुपालन एवम् दुग्ध सहकारीता प्रवर्द्धनको राम्रो सम्भावना देखिन्छ ।

## ४.४ यस व्यवसायको समस्या तथा चुनौती

स्थलगत अध्ययनको क्रममा दुग्ध सहकारीसँग प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा सम्बन्ध राख्ने सरोकारवालाहरू कृषक, सहकारीका व्यवस्थापक, जिल्ला सहकारी संघ, सहकारी डिभिजन, कृषि विकास कार्यालयका विज्ञहरू, पशु सेवा कार्यालयका विज्ञहरू आदिसँग गरिएको छलफल एवम् प्रश्नावली सर्वेक्षणको आधारमा दुग्ध सहकारी तथा कृषकका समस्या एवम् चुनौतीहरूलाई औंल्याइएको छ ।

### दुग्ध सहकारीका प्रमुख समस्याहरू :

**कर्जा :** ग्रामिण स्वावलम्बन कोष एवम् गरिबी निवारण कोष मार्फत् प्रवाह हुने कर्जाहरू ग्रामीण क्षेत्रका कृषकहरूका लागि मात्र लक्षित हुने गरेकोले नगरपालिका भित्र पर्ने केही ग्रामीण इलाकाका कृषकहरूले यस्ता सुविधाबाट बञ्चित हुन परेको ।

**कोषको अभाव :** सहकारीमा आबद्ध शेयर सदस्यहरूले ठूलो मात्रामा शेयर पुँजी जम्मा गर्न नसक्ने तथा वचत संकलन पनि कम हुने भएकोले कृषकहरूको माग बमोजिम लगानी गर्न कोषको अभाव हुने गरेको ।

**प्रविधि :** अधिकांश सहकारीहरूमा चिस्यान मेसिनको अभावले गर्दा पटक पटक दूध बिग्रने गरेको ।

**ढुवानी** : चिस्यान केन्द्रसम्म दूध पुऱ्याउन विभिन्न यातायातका साधनहरू लगायत भरिया समेतको प्रयोग हुने गरेकोमा भौगोलिक जटिलता एवम् लामो दुरीका कारणले सहज ढुवानी हुन नसक्ने र ढुवानीको लागत पनि बढी पर्ने समस्या रहेको ।

**विद्युत् :**ग्रामिण विद्युतीकरणको अभाव एवम् लामो लोड शेडिङका कारणले सबै ठाउँमा चिस्यान केन्द्र स्थापना गर्न नसकिएको र स्थापित चिस्यान केन्द्रहरू वैकल्पिक ऊर्जा (जेनेरेटर) द्वारा सञ्चालन गर्नु पर्ने भएकोले दूधको लागत उच्च पर्न जाने ।

### कृषकका समस्याहरू

**पुँजी तथा ब्याजदर :** जिल्लाका केही कृषकहरू व्यावसायिक पशुपालनका लागि प्रोत्साहित भएता पनि उनीहरूसँग पुँजीको अभाव रहेको र सहकारीबाट प्राप्त ऋण सुविधा पर्याप्त नहुने तथा अन्य बैंक तथा वित्तीय संस्थाको ऋणको ब्याजदर उच्च रहेको कारणबाट पनि लगानी हुन नसकेको ।

**घाँस :** मकवानपुर जिल्लामा घाँस विकासका लागि कबुलियत वनमा घाँस विकास कार्यक्रम आ.व. २०४९/०५० देखि लागू गरिएकोमा हाल ती वनहरूमा घाँस उत्पादन रोकिएको, घाँस उत्पादनका लागि वैकल्पिक जग्गाको अभाव रहेको, उन्नत घाँसको बिउको अभाव रहेको, सिँचाइको समस्या, परालमा फिर्ताहुने गरी कर लाग्ने तर कर फिर्ता हुँदा कृषकले प्राप्त गर्न नसक्ने आदि कारणले गर्दा पशुको प्रमुख आहारा घाँसको समस्या हुने गरेको ।

**प्राविधिक समस्या** : कृषकहरूमा पशुपालन सम्बन्धि प्राविधिक ज्ञानको अभाव रहेकोले गर्दा कृत्रिम गर्भाधान, उन्नत पशु छनोट, पशु रोगको उपचार आदिमा कठिनाइ हुने गरेको ।

**बीमा :** मकवानपुर जिल्लाका अधिकांश कृषकहरूका पशुधनको सुरक्षाका लागि बीमाको अभाव रहेको । केही सहकारीहरूले आफ्नै प्रयासमा पशुबीमा कार्यक्रम लागू गरेको भएपनि सो सेवा पर्याप्त नरहेको ।

**सिँचाइ/पानी :** मकवानपुर जिल्लाका कतिपय स्थानमा उपयुक्त सिँचाइको अभाव रहेको छ भने कतिपय स्थानमा खानेपानीको समेत समस्या रहेको छ । यसले गर्दा घाँस उत्पादन एवम् पशुपालनमा समस्या रहेको ।

**दाना :** पशुपालनका लागि आवश्यक दाना तथा चोकरको सहज आपूर्ति नहुने कारणले पशु आहारा सम्बन्धि समस्या रहेको ।

**अन्य:** कुन समयमा गर्भाधान गराउनु उपयुक्त हुन्छ भन्ने ज्ञानको कमीले कृत्रिम गर्भाधान गराउँदा पटक पटक गराउनु पर्ने, उन्नत जातको पशु पहिचान गर्न प्राविधिक ज्ञानको कमी, दूध बिक्री सहकारी भन्दा बाहिर गर्दा राम्रो मूल्य पाउने भए पनि नियमित माग नहुने आदि जस्ता समस्याहरू पनि कृषकहरूले भोगिरहेका पाइयो ।

## ५ निष्कर्ष तथा सुझाव

### ५.१ निष्कर्ष

भौगोलिक कठिनाइ, विद्युत् समस्या, प्राविधिक समस्या आदि हुँदाहुदै पनि मकवानपुर जिल्लाका दुग्ध सहकारीहरू व्यवस्थित किसिमले सञ्चालन भइरहेको पाइयो । यस जिल्लामा हाल कृषकहरूले भैंसी पालनलाई भन्दा गाई पालनलाई प्राथमिकता दिएको पाइयो । सर्वेक्षण अनुसार ६० प्रतिशत कृषकहरूले गाईपालन गरेको देखिन्छ । कृषकहरू व्यवसायिक पशुपालनतर्फ आकर्षित भएको भएपनि संख्यात्मक हिसाबले हालसम्मको पशुपालनको अवस्था हेर्दा ठूलो स्तरमा पशुपालन गर्ने कृषकको संख्या नगण्य पाइयो ।

सहकारीहरू मार्फत् दूधको स्थायी बजार व्यवस्थापन, आर्थिक एवम् प्राविधिक सहयोग, पशुधन सुरक्षा, औषधोपचारको सुविधा आदिले गर्दा कृषकहरूलाई सुविधा पुगेको र यसबाट कृषकको आय आर्जन तथा रोजगारीमा सकारात्मक प्रभाव परेको पाइयो । दूधको बजार व्यवस्थापनमा एकद्वार नीति लागू गरिएकोले दूधको बजार दिगो रूपमा व्यवस्थापन गरिएको देखिन्छ । यसबाट सहकारीहरूमा दूधको मागमा हुन सक्ने अनिश्चितताको जोखिम न्यूनीकरण भएको देखिन्छ । दूधको मूल्यको सम्बन्धमा कृषकहरू प्राय: सन्तुष्ट रहेको पाइए पनि भैसीको दूधलाई गाईको दूधको तुलनामा बढी मूल्य पर्ने खालको मूल्य नीति प्रति भने कृषकहरूले गुनासो गरेको पाइयो । मूल्य निर्धारण गर्दा कृषकहरूको पनि भूमिका रहने गरी नीति बनाउनु पर्ने आवश्यकता तर्फ कृषकहरूले जोड दिए ।

जिल्ला कृषि कार्यालयको आर्थिक एवम् प्राविधिक सहयोगमा सञ्चालित गोठ सुधार कार्यक्रमले गर्दा पशुको मल मुत्रको उचित व्यवस्थापन भई पशुस्वास्थ्यमा सकारात्मक प्रभाव पर्नुका साथै कृषि उत्पादन वृद्धि गर्न समेत सहयोग पुगेको पाइयो । यस जिल्लामा पशुपालनको राम्रो सम्भावना रहेको र सहकारीहरूले सोही अनुसार व्यावसायिक पशुपालनलाई लक्षित गरी विभिन्न कार्यक्रमहरू संचालन गरेको पाइयो । यी कार्यक्रमहरू आफ्ना लक्ष्यमा क्रमश: सफल हुँदै गरेको देखिन्छ । हाल जिल्लाको दूध मागको ठूलो अंश जिल्ला भित्रै उत्पादन हुने गरेको पाइयो ।

सहकारीहरूमा लगानीको लागि पर्याप्त पुँजीको अभाव रहेको तथा कृषकहरूसँग लगानी योग्य पुँजी अभाव रहेकोले व्यवसाय विस्तार हुन नसकेको पाइयो । त्यस्तै पशुपालनका लागि पर्याप्त प्राविधिक ज्ञानको अभावले पशु स्वास्थ्य हेरचाह तथा कृत्रिम गर्भाधानमा कृषकहरूले समस्या भोग्नु परेको पाइयो । त्यस्तै सिँचाइ अभाव, घाँस विकासका लागि स्थान एवम् बिउ अभाव, खानेपानीको समस्या, पशुधनको सुरक्षाको पर्याप्त सुविधाको अभाव, महँगो दाना चोकर, परालमा फिर्ता हुने गरी कर लाग्ने तर फिर्ता हुँदा कृषक समक्ष नपुगी व्यापारीले प्राप्त गर्ने लगायतका कृषकका प्रमुख समस्या रहेको देखियो ।

### ५.२ सुझाव

यस अध्ययनबाट पशुपालन एवम् दुग्ध सहकारीका सम्बन्धमा देखिएका समस्याहरू, स्थलगत अध्ययनका समयमा गरिएको अवलोकन तथा छलफलमा प्राप्त जानकारीहरूका आधारमा निम्नानुसार सुझाव पेश गरिएको छ ।

- बजेट, जनशक्ति र अध्ययन अवधिका कारणले यो अध्ययन साघुँरो घेरा भित्र सिमित भएकोले सरकारी स्तरबाटै निश्चित संयन्त्र बनाई यस सम्बन्धमा विस्तृत अध्ययन हुन सके पशुपालन तथा दुग्ध व्यवसाय प्रवर्द्धनमा टेवा पुग्ने देखिन्छ ।
- हाल कृषकहरू उन्नत गाई पालनतर्फ आर्कषित भएकोले यस सम्बन्धमा कृषकहरूलाई आवश्यक प्राविधिक ज्ञान, तालिम आदि सहज रूपमा उपलब्ध हुने व्यवस्था गर्न आवश्यक देखिन्छ ।
- दूधको मूल्य निर्धारण गर्दा हालको व्यवस्थाको अतिरिक्त लागतको आधारमा कृषकको समेत सहभागितामा मूल्य निर्धारण हने संयन्त्र निर्माण हुन उपयुक्त देखिन्छ ।
- पशुपालनको लागि लक्षित गरी सहकारी मार्फत् विभिन्न कोषहरू द्वारा गरिने लगानीको मात्रामा वृद्धि गर्दा कृषकहरूलाई सहयोग पुग्ने देखिन्छ । यसरी गरिने लगानीका लागि वास्तविक ग्रामीण कृषकको पहिचान हुन आवश्यक देखिन्छ ।
- दुर्गम क्षेत्रका चिस्यान केन्द्रको दूध ढुवानीमा उच्च लागत रहेकोले सो लागत न्यूनीकरणका लागि सरकारी स्तरबाट दूध ढुवानीमा अनुदान, यस्ता सवारी साधनमा कर छुट जस्ता विशेष नीति निर्माण हुन आवश्यक देखिन्छ ।
- विद्युत् अभाव एवम् लोडशेडिङको समस्याले चिस्यान केन्द्रको/सहकारीहरूको लागत बढिरहेकोले उक्त लागत कम गर्न यस्ता केन्द्रहरूमा विद्युत् आपूर्ति नियमित गर्ने वा वैकल्पिक ऊर्जाका लागि अनुदान दिने व्यवस्था मिलाएमा यस व्यवसायमा टेवा पुग्ने देखिन्छ ।
- विगतमा कवुलियत वनमा प्रशस्त घाँस उत्पादन भईरहेकोमा हाल यसमा कमी आएकोले थप क्षेत्रहरूमा सो कार्यक्रम पुनः सञ्चालन गरेमा कृषकहरूले उठाएको घाँसको समस्या कम गर्न सकिने देखिन्छ । त्यस्तै कतिपय स्थानमा खानेपानीको समेत अभाव रहेको र यसले गर्दा पशुपालनमा समेत नकारात्मक असर परेकोले खानेपानीको उचित व्यवस्था हुन आवश्यक देखिन्छ । सिँचाइ सुविधाको आवश्यक विस्तार गर्न सके घाँस विकास तथा व्यावसायिक खेतिपातीमा सहयोग पुगी पशुपालनमा समेत सकारात्मक सहयोग पुग्ने देखिन्छ ।

# ४. तालिकाहरू

तालिका ४.१

प्रमुख कृषि बालीहरूले ढाकेको क्षेत्रफल (नारायणी अञ्चल)

*हेक्टरमा*

| बालीको नाम | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **खाद्य तथा अन्य बाली** | **४३९८४८** | **४२४८५३** | **४४८२५०** | **३६८,८९७** | **३७३,६३३** | **३७५,२५८** |
| धान | १८९७७१ | १८११३९ | १९१७४५ | १५२,५२० | १५७,५८० | १५७,६९५ |
| मकै | ४८०३९ | ४३५०३ | ५२७३५ | ४९,८२८ | ४८,४३६ | ४८,५२८ |
| गहुँ | १०३,५८६ | ८१,०७० | ८१,२४१ | ७१,६९२ | ७२,४६३ | ७२,५६३ |
| कोदो | ४६९९ | ४८८९ | ४८७८ | ४,५४६ | ४,५६८ | ४,५७० |
| जौं | ३०५ | १८२ | १८३ | ११८ | १२३ | १३३ |
| फापर | - | - | - | १५० | १५० | १५० |
| आलु | १६,७१० | १७,०७५ | १७,६४६ | १३,१९५ | १३,७५८ | १३,९३० |
| उखु | १०,३६० | १०,४३५ | १२,०९० | ७,९०० | ८,०१० | ९,००५ |
| सनपाट | - | - | - | - | - | - |
| सुर्ती | २१५ | २१० | २३० | २९५ | ३१५ | ३३८ |
| भटमास | १,४८० | १,५१० | १,५१० | १,७६० | १,७९० | १,७९० |
| दलहन | ३१,६९६ | ५२,१९५ | ५२,७७८ | ४६,०८८ | ४५,८६३ | ४५,९८१ |
| तेलहन | ३२,९८७ | ३२,६४५ | ३३,२१४ | २०,८०६ | २०,५७७ | २०,५७५ |
| **तरकारी तथा बागबानी** | **२९,७०२** | **३१,९५७** | **३३,०४०** | **१७,६३४** | **१८,३६४** | **१८,२६२** |
| तरकारी | २९,६१७ | ३१,९५७ | ३३,०४० | १७,६३४ | १८,३६४ | १८,२६२ |
| अन्य (नर्सरी, च्याउ, कट फ्लावर) | ८५ | - | - | - | - | - |
| **फलफूल तथा मसला** | **७,२६६** | **८,२६५** | **९,७३२** | **५,७३०** | **६,६७५** | **६,९५७** |
| सुन्तला | २४७ | २८७ | ३१४ | २८२ | २९२ | २९९ |
| आँप | ४,७६६ | ४,५५८ | ५,४४३ | २,७५० | २,८९० | २,९६६ |
| केरा | ७३ | ८१ | ८१ | ७७८ | ९०४ | ९१८ |
| स्याउ | ३ | ३ | ३ | ३ | ३ | ३ |
| अन्य फलफूल | १,०५८ | १,७७० | १,२६२ | ६४६ | १,१२८ | १,२१० |
| मसला | १,०९९ | १,५४६ | २,६११ | १,२५१ | १,४३८ | १,५४१ |
| चिया | - | - | - | - | - | - |
| कफी | २० | २० | १८ | २० | २० | २० |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.२
## प्रमुख कृषि बालीहरूको उत्पादन (नारायणी अञ्चल)

*मे. टनमा*

| बालीको नाम | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| खाद्य तथा अन्य बाली | **१७३८५९०** | **१६३५७३७** | **१८४९९७२** | **७३१,६९५** | **८०४,८१४** | **८८९,१८२** |
| **धान** | ६६१३४० | ५७७३८८ | ५८७८९४ | ५०४,३९३ | ५२२,५६९ | ६२३,९२९ |
| **मकै** | १२८७३० | १०६८७० | १४२२०६ | ११७,०२४ | ११६,२४१ | १२०,१७६ |
| **गहुँ** | २३०७३५ | २४१२०३ | २५९९८८ | – | – | – |
| **कोदो** | ५३४४ | ५३०१ | ५२८७ | ४,९७९ | ५,१८८ | ५,२३१ |
| **जौं** | ७०९ | १५८ | १५३ | – | – | – |
| **फापर** | १५३ | १५६ | १५९ | – | – | – |
| **आलु** | २४५,१५१ | २५६,०२८ | ३३१,६३९ | ५२,२६१ | १०६,६५५ | ८४,५५२ |
| **उखु** | ३७४,०९५ | ३७२,३२५ | ४३३,७७८ | ५०,४३० | ५१,२९४ | ५२,२९० |
| **सनपाट** | – | – | – | – | – | – |
| **सुर्ती** | ३०२ | ३१८ | ३४७ | २४७ | २५५ | ३०६ |
| **भटमास** | १,३६२ | १,२१० | १,२९८ | १,६२६ | १,५७८ | १,५८८ |
| **दलहन** | ६५,१९६ | ४८,३८३ | ५५,१८४ | ३९२ | ६८९ | ७६२ |
| **तेलहन** | २५,४७३ | २६,३९७ | ३२,०४० | ३४४ | ३४५ | ३४८ |
| तरकारी तथा बागबानी | **३७८,१६८** | **४५७,४१७** | **४७२,७५९** | **२२४,६०५** | **२३४,३३२** | **२३७,९००** |
| **तरकारी** | ३७८,१६० | ४५७,४१७ | ४७२,७५९ | २२४,६०५ | २३४,३३२ | २३७,९०० |
| **अन्य (नर्सरी, च्याउ, कट फ्लावर)** | ८ | – | – | – | – | – |
| फलफूल तथा मसला | **६९,२५०** | **७४,७१४** | **६७,३२३** | **२०,३८८** | **२३,८२९** | **२५,१४५** |
| **सुन्तला** | २,३८६ | २,१८३ | २,२३९ | २,१८५ | २,२८९ | २,०७७ |
| **आँप** | ४३,०५० | ४२,१६३ | २३,९०८ | ३,११० | २,६४० | २,३०० |
| **केरा** | | | | ६,५०० | ८,२०१ | ९,५०५ |
| **स्याउ** | | | | – | – | – |
| **अन्य फलफूल** | १३,८५७ | १८,०१६ | १४,०७६ | १,४९० | १,७३० | १,९७२ |
| **मसला** | ९,२४३ | ११,५७५ | २६,३१६ | ७,०१७ | ८,९३० | ९,२५६ |
| **चिया** | | | | – | – | – |
| **कफी** | ८० | ७८ | ३९ | ८६ | ३९ | ३५ |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.३
## प्रमुख पशुपंक्षी, माछा तथा वनजन्य उत्पादन (नारायणी अञ्चल)

| पशपंक्षीको विवरण | एकाइ | वार्षिक (आषाढ मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|---|
| | | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **पशुधन:** | | | | | | | |
| **दूध** | मे.लिटर | २१६,४३४ | २२०,६७६ | २३८,०५२ | १३०,६५७ | १३६,६२७ | २१९,४४४ |
| **मासु** | मे.टन | ८४,१९४ | ८५,८५७ | ९६,२१२ | ६५,१८८ | ४८,०६४ | ५०,७७२ |
| ***भैंसी/राँगो*** | | ३७,४९१ | २७,८२१ | ४१,९९७ | १८,११८ | २०,४०८ | २०,९१२ |
| ***खसी/बोका/भेंडा*** | | २३,५५२ | २३,७२४ | २५,७११ | ११,९९६ | १३,०५५ | १३,७१६ |
| ***सुंगुर/बंगुर*** | | ७,६५१ | ७,६८८ | ८,९३६ | ३,७८५ | ४,४०७ | ४,८३४ |
| ***कुखुरा/हाँस*** | | १५,५०२ | १६,६२४ | १९,५६७ | ८,७१३ | १०,१९४ | ११,३६४ |
| **अण्डा** | हजार गोटा | | | | | | |
| ***कुखुरा*** | | २५४,६५७ | २६५,६९३ | २७७,५३७ | १२५,३७४ | १३०,३९७ | १५६,६२६ |
| ***हाँस*** | | २,६५२ | २,४३४ | २,८२३ | १,२३७ | १,३८९ | १,४१९ |
| **उन उत्पादन** | के.जी. | - | - | - | - | - | - |
| **मह उत्पादन** | मे.टन | - | - | - | - | - | - |
| **हाड उत्पादन** | मे.टन | - | - | - | - | - | - |
| **छाला उत्पादन** | **हजार वर्ग फिटमा** | ४६,८४२ | ५५,५०६ | ५८,६४३ | १२०,२३५ | १२४,६२२ | १५६,०१८ |
| | | - | - | - | - | - | - |
| **माछापालन:** | मे.टन | - | - | - | - | - | - |
| **माछा उत्पादन** | | ३,२६३ | ३,६६९ | २,२३४ | २,३७४ | ३,८१९ | ३,९४६ |
| **वनजन्य** | | - | - | - | - | - | - |
| **काठ** | क्युविक फिट | ४४८,९०० | ८४१,२५७ | २५८,९०५ | ५९९,३०४ | ३१,६२४ | ३४९,२८० |
| **दाउरा** | मे.टन | १८,५३६ | १५,११८ | १५,६०१ | १,२५७,२४५ | ५१०,१०६ | ५६०,४७० |
| **औषधिजन्य वस्तु** | मे.टन | ३१ | ७७ | ७५ | ९ | ५ | ११ |
| **अन्य उत्पादन** | क्युविक फिट | २३,१२४ | १५,४०४ | - | - | ११ | - |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.४
## कृषि कर्जा लगानी स्थिति (नारायणी अञ्चल)

*रु. दश लाखमा*

| जिल्ला | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **बाली/बाली सेवा** | १११ | ९५ | ८० | ३८१ | ४११ | ३७२ |
| **चिया** | – | – | – | ६७ | – | १५ |
| **सूर्ती** | २ | ० | १० | – | १ | – |
| **सनपाट** | – | ११ | – | – | – | – |
| **चिनी** | ७२ | १०३ | ६१ | १०८ | १४९ | १५१ |
| **पशुपालन/पशुपालन सेवा** | १७७ | ७६२ | ६७८ | ६९८ | ४८८ | ५२० |
| **वन, माछापालन र** | २४३ | ६९ | ७० | ७ | ८ | १ |
| **पशु वधशाला** | – | – | – | १४१ | ९२ | १३२ |
| **अन्य कृषि तथा कृषिजन्य सेवाहरू** | ४,३९० | ४,०९८ | ४,४५६ | २,८५४ | २,४२७ | २,४५६ |
| **जम्मा** | **४,९९५** | **५,१३८** | **५,३५६** | **४,२५५** | **३,५७६** | **३,६४७** |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

तालिका ४.५
प्रमुख उद्योगहरूको क्षमता उपयोग (नारायणी अञ्चल)

| उद्योग | आ.व. २०६७/०६८ को वार्षिक (आषाढ मसान्त) | | | आ.व. २०६८/०६९ को अर्ध वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | उत्पादन (क) | उत्पादन क्षमता (ख) | क्षमता उपयोग = (क/ख) × १०० | उत्पादन (क) | उत्पादन क्षमता (ख) | क्षमता उपयोग = (क/ख) × १०० |
| वनस्पती घ्यू | ६,१८१ | १०५,००० | ६ | १,२५५ | ५९,७५० | २.१० |
| बिस्कुट | - | - | - | | | |
| चिनी | - | - | - | | | |
| चाउचाउ | - | - | - | | | |
| प्रशोधित चिया | - | - | - | | | |
| बियर | २,२१९ | १०,००० | २२ | ८४३ | ५,००० | १६.८६ |
| चुरोट | १,२२१ | ३,००० | ४१ | ५७४ | ५,००० | ११.४७ |
| सुती कपडा | ७,८७२ | १२,३०० | ६४ | ४,२७७ | ६,७०० | ६३.८४ |
| उनी गलैंचा | - | - | - | | | |
| पश्मिना | - | - | - | | | |
| गार्मेन्ट | - | - | - | | | |
| कागज | - | - | - | | | |
| साबुन | ३,६३५ | ८,००० | ४५ | १,३११ | ४,२४२ | ३०.९१ |
| ईंटा | - | - | - | | | |
| सिमेन्ट | ७१,७५१ | १५६,००० | ४६ | ३७,४७१ | ७८,००० | ४८.०४ |
| फलामको रड | २०१,३६० | ५४७,५०० | ३७ | ८५,६७४ | १३६,८७५ | ६२.५९ |
| बिजुलीको तार | - | - | - | | | |
| प्रशोधित छाला | २,२७७ | २९,००० | ८ | २,९०७ | १४,५०० | २०.०५ |
| | | औसत | ३३.६१ | | | ३१.९८ |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.६
## छनोट गरिएका प्रमुख उद्योगहरूको उत्पादन स्थिति (नारायणी अञ्चल)

| उत्पादित वस्तुको नाम | एकाइ | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|---|
| | | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| बनस्पती घ्यू तथा तेल | | **२३,४५९** | **१८,३५५** | **१९,४१४** | **२,६९७** | **३,९६९** | **७,८३८** |
| **वनस्पती ध्यू** | मे. टन | १२,७४३ | ९,७३५ | ६,१८१ | २,२२५ | १,२६५ | १,२५५ |
| **तोरीका तेल** | मे. टन | ९,१४४ | ६,६२३ | ११,४८३ | ४७२ | ८२० | - |
| **भटमासको तेल** | मे. टन | १,५७२ | १,९९७ | १,७५० | - | १,८८४ | ६,५८३ |
| दुग्ध पदार्थ | | **४,७५४,१३८** | **४,६७४,४९९** | **६,३०५,७१७** | **१,५६२** | **१,४९८** | **१,३८८** |
| **प्रशोधित दूध** | हजार लिटर | ४,७५४,१३८ | ४,६७४,४९९ | ६,३०५,७१७ | १,५६२ | १,४९८ | १,३८८ |
| पेय पदार्थ | | **१४,८४४** | **१८,५३८** | **२०,०८०** | **७,४९२** | **८,९२६** | **८,१४८** |
| **वियर** | हजार लिटर | ७६४ | १,७२८ | २,२१९ | १,०९२ | १,१९७ | ८४३ |
| **हल्का पेय पदार्थ** | हजार लिटर | १४,०८० | १६,८१० | १७,८६१ | ६,४०० | ७,७२९ | ७,३०५ |
| सुर्तीजन्य वस्तु | | **१,१४१** | **१,५७७** | **१,२२१** | **८८२** | **५६८** | **५७४** |
| **चुरोट** | दश लाख खिल्ली | १,१४१ | १,५७७ | १,२२१ | ८८२ | ५६८ | ५७४ |
| लत्ता कपडा | | **१०,९६२** | **१४,०५०** | **९,०४२** | **६,१७६** | **५,२७९** | **४,५६१** |
| **यार्न** | मे. टन | २,३८५ | ३,८१२ | १,१७० | १,१८३ | ९१० | २८४ |
| **सुती कपडा** | हजार मिटर | ८,५७७ | १०,२३८ | ७,८७२ | ४,९९३ | ४,३६९ | ४,२७७ |
| छाला र छालाको सामान | | **७,२६६** | **४,१४५** | **४,२४७** | **१,८८४** | **१,६७५** | **२,९०७** |
| **प्रशोधित छाला** | हजार वर्गफिट | ७,२६६ | ४,१४५ | ४,२४७ | १,८८४ | १,६७५ | २,९०७ |
| काठ तथा काठका सामान | | **२,९५०** | **२,६५०** | **२,३८५** | **१,३२५** | **१,१९२** | **१,२५०** |
| **चिरान काठ** | क्यू. फिट | २,९५० | २,६५० | २,३८५ | १,३२५ | १,१९२ | १,२५० |
| अन्य रासायनिक पदार्थ | | **१०७,४९७** | **१०१,९६६** | **१,१२७,९३९** | **४५,९२१,०२२** | **६७,४१२,६०८** | **६२,१२१,६४३** |
| **औषधि** | | **५२,७३४** | **४९,७८२** | **५६२,१५२** | **२२,९६०,०३५** | **३३,७०५,५७९** | **३१,०६०,१६६** |
| **Tablet** | हजार थान | ४२,८०९ | ३८,३५५ | ४६,९७३ | १७,७३८,९२० | २६,६८४,१४८ | २५,९२५,६४० |
| **Capsule** | हजार थान | ७,१६० | ८,२०२ | १,०२६ | ३,६७६,७८० | ५,३०७,२१० | ३,४७८,७५० |
| **Ointment** | हजार ट्युब | ४६२ | ६६० | ६५७ | ३३६,०४४ | ३९३,३३२ | ४२३,२३५ |
| **Dry Syrup** | हजार बोतल | ४३९ | ५२९ | ५११,६११ | २७१,४३६ | २७१,५७५ | २१३,३५४ |
| **Liuid** | हजार बोतल | १,८६४ | २,०३७ | १,८८५ | ९३६,८५५ | १,०४९,३१४ | १,०१९,१८७ |
| **सावुन** | मे. टन | २,०२९ | २,४०२ | ३,६३५ | ९५२ | १,४५० | १,३११ |
| प्लाष्टिकजन्य उत्पादन | | **६७२** | **९७४** | **६०८** | **४०७** | **३००** | **२३५** |
| **प्लाष्टिकका सामान** | मे. टन | ६७२ | ९७४ | ६०८ | ४०७ | ३०० | २३५ |
| गैरधातु खनिजजन्य उत्पादन | | **९२,७७०** | **१००,३७१** | **८५,२८२** | **५७,३५९** | **४८,८१७** | **३७,४७१** |
| **सिमेन्ट** | मे. टन | ९२,७७० | १००,३७१ | ८५,२८२ | ५७,३५९ | ४८,८१७ | ३७,४७१ |
| फेब्रिकेटेड धातुका सामान | | **१४२,३८५** | **२३२,६८१** | **२४७,६१८** | **११८,५४८** | **१४०,२१५** | **१२२,५३३** |
| **फलामे पत्ति** | मे. टन | १८,६१४ | २१,१४४ | २९,४२६ | ११,१६० | १७,०५६ | १७,७३८ |
| **फलामे रड** | मे. टन | ८३,९०७ | १६१,६३० | १७१,९३४ | ८३,४६० | ९७,१८२ | ८५,६७४ |
| धातुका उपकरण | | **३९,८६५** | **४९,९०६** | **४६,२५८** | **२३,९२८** | **२५,९७६** | **१९,१२०** |
| **घरेलु धातुका सामान** | मे. टन | ३९,८६५ | ४९,९०६ | ४६,२५८ | २३,९२८ | २५,९७६ | १९,१२० |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.७

औद्योगिक कर्जा लगानी स्थिति (नारायणी अञ्चल)

रु. दश लाखमा

| जिल्ला | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| खानीसम्बन्धी | १२ | ६१ | ७२ | ९३७ | १८६ | ३,७७६ |
| उत्पादनसम्बन्धी | ८,४३७ | ९,१२१ | १०,४३३ | ७,९९३ | ९,७०५ | ८,९६५ |
| निर्माण | १,४३९ | ३,१८० | २,७२७ | ३,२८१ | ३,५७९ | ३,०४८ |
| धातूका उत्पादन, मेसिनरी तथा ईलेक्ट्रोनिक | ३,०११ | २,७४० | २,३५६ | ३,०१६ | २,९११ | ३,४६१ |
| सेवा उद्योग (पर्यटन) | १,०८१ | १,११७ | १,२०६ | १,३९६ | १,११४ | १,८७३ |
| कुल | १३,९७९ | १६,२१८ | १६,७९४ | १६,६२२ | १७,४९४ | २१,१२२ |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

तालिका ४.८
पर्यटन स्थिति

| पर्यटक आगमन संख्या | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| पर्सा (तेस्रो मुलुकबाट आएका) | १,१५३ | १,१८७ | ७८१ | ७०७ | ३४८ | ३४४ |
| चितवन राष्ट्रिय निकुञ्ज* | ५६,३०६ | ७१,३२० | ८०,३२३ | ४४,०१५ | ५३,९१६ | ७०,२१३ |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*
** वार्षिक तथ्याङ्कमा चितवन राष्ट्रिय निकुञ्जको सौराहको तथ्याङ्क मात्र समावेश भएको*

तालिका ४.९
बैंक तथा वित्तीय संस्थाका शाखाहरू (नारायणी अञ्चल)

| प्रकार | २०६८ आषाढ मसान्त | २०६८ पौष मसान्त |
|---|---|---|
| वाणिज्य बैंक | १०५ | १२१ |
| विकास बैंक | ६५ | ९३ |
| वित्त कम्पनी | ३० | ३२ |
| लघु वित्त विकास बैंक | | - |
| जम्मा | २०० | २४६ |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.१०
## निक्षेप तथा कर्जा स्थिति (नारायणी अञ्चल)

*रु.दश लाखमा*

| जिल्ला | निक्षेप | | | | | | कर्जा | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **बारा** | १,९२२ | २,२४९ | २,४०० | २,४८५ | २,१९१ | २,५१६ | १,३८७ | १,५०४ | १,६६२ | १,५१० | १,६५४ | १,८७१ |
| **पर्सा** | ७,७९१ | ९,९३६ | ११,०९५ | ८,४२७ | ११,९६५ | १०,९१२ | १७,६६० | १८,३०५ | २२,५७१ | १७,९५५ | २४,४०६ | २७,११४ |
| **चितवन** | ८,२२१ | ९,६८३ | ९,८३३ | ८,९६२ | ८,२९५ | १०,०३६ | ६,५३९ | ८,८५६ | ९,८०६ | ७,०९५ | ८,५७५ | १०,८५१ |
| **मकवानपुर** | ४,४६३ | ५,००४ | ४,६४८ | ५,२४८ | ४,५३१ | ५,५७६ | २,९०८ | ३,३४५ | ३,४४८ | ४,३४१ | ३,७९३ | ४,६४३ |
| **रौतहट** | १,५११ | १,६७० | १,८७० | १,५१३ | १,६१६ | २,०५६ | ८३७ | ९२५ | १,००८ | ९०० | ७९८ | १,१७६ |
| **जम्मा** | २३,९०९ | २८,५४३ | २९,८४७ | २६,६३४ | २८,५९७ | ३१,०९६ | २९,३३२ | ३२,९३६ | ३८,४९५ | ३१,८०१ | ३९,२२६ | ४५,६५६ |

*स्रोत: नेपाल राष्ट्र बैंक: वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

## तालिका ४.११
## सरकारी खर्च तथा राजश्वको विवरण (नारायणी अञ्चल)

*रु दश लाखमा*

| विवरण | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **चालू खर्च** | ७२१५.४ | ९३४० | १०१३५.९ | ४,३५८.७२ | ३,७३९.६० | ६,३४४.६३ |
| **पुँजीगत खर्च** | २८६६ | ४०५७.९ | ४६४४.९ | ९२८.०३ | ७९६.८९ | ७८३.३२ |
| **राजश्व*** | ४५३६९.८४ | ६१७७०.७ | ५९३८०३ | २७,२९३.८० | ३३,८३९.६५ | ११०,०३१.४० |
| **कर राजश्व** | _ | _ | _ | २९,७६८.०० | ३०,९३०.०२ | १०६,७९१.६८ |
| **गैरकर राजश्व** | _ | _ | _ | १,०९९.६० | २,९०९.६३ | ३,२३९.७२ |
| **बेरुजु** | _ | _ | _ | - | १.७९ | ४.२८ |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*
**वार्षिक तथ्याङ्कमा कुल राजश्व उल्लेख गरिएको।*

## तालिका ४.१२
## वैदेशिक व्यापारको स्थिति (नारायणी अञ्चल)

*रु. दश लाखमा*

| | वार्षिक (असार मसान्त) | | | अर्ध-वार्षिक (पौष मसान्त) | | |
|---|---|---|---|---|---|---|
| | आ.व. २०६५/०६६ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६६/०६७ | आ.व. २०६७/०६८ | आ.व. २०६८/०६९ |
| **कुल निर्यात** | **१९,२८४** | **१५,५३७** | **१६,६१९** | **७६७७.६** | **७६०३.५** | **८८१३.७** |
| भारत | १३,८९७ | १०,७६४ | ११,६२७ | ५०६०.२ | ५४८७.० | ६५०५.८ |
| अन्य राष्ट्रहरू | ५,३८७ | ४,७७३ | ४,९९२ | २६१७.४ | २११६.५ | २३०७.९ |
| **कुल आयात** | **१४५,५३७** | **१७९,९४५** | **२१५,१६३** | **८१७६७.१** | **१०३५१७.९** | **११७२४५.७** |
| भारत | ९३,६८८ | १२०,१२५ | १४९५२६ | ५४३१०.७ | ७३०३४.४ | ८०७८४.० |
| अन्य राष्ट्रहरू | ५१,८४९ | ५९,८२० | ६५६३७ | २७४५६.४ | ३०४८३.५ | ३६४६१.७ |
| **व्यापार सन्तुलन** | **-१२६.३** | **-१६४.४** | **-१९८.५** | **-७४.१** | **-९५.९** | **-१०८.४** |
| भारत | -७९.८ | -१०९.४ | -१३७.९ | -४९.३ | -६७.५ | -७४.३ |
| अन्य राष्ट्रहरू | -४६.५ | -५५.० | -६०.६ | -२४.८ | -२८.४ | -३४.२ |
| **कुल व्यापार** | **१६४८२१.०** | **१९५४८२.०** | **२३१७८२.०** | **८९४४४.६** | **१११२१.३** | **१२६०५९.३** |
| भारत | १०७५८५.० | १३०८८९.० | १६११५३.० | ५९३७०.९ | ७८५२१.४ | ८७२८९.७ |
| अन्य राष्ट्रहरू | ५७२३६.० | ६४५९३.० | ७०६२९.० | ३००७३.८ | ३२६००.० | ३८७६९.६ |

*स्रोतः नेपाल राष्ट्र बैंकः वार्षिक आर्थिक प्रतिवेदन २०६७/०६८ तथा अर्ध वार्षिक आर्थिक प्रतिवेदन २०६८/०६९*

# ५. तस्वीरहरू

## कार्यालय भवन




## वार्षिकोत्सव कार्यक्रम २०६९ वैशाख १४






